# रामगीता



अनुवादक

**बदरीनाथ भट्टराई**

**रत्न पुस्तक भण्डार**
काठमाडौं

संस्करण : २०६०

प्रकाशक : रत्न पुस्तक भण्डार, काठमाडौं, नेपाल

आवरणकला : मल्टिग्राफिक वर्कसप, बागबजार
टाइपसेटिङ : मानवमिति कम्प्युटर सर्भिस
मुद्रक : पाल्ही प्रेस, काठमाडौं

Ram Geeta

RPBN: 200-23-2-0656

# निवेदन

उपनिषद्‌रूपी समुद्र मथेर भगवान् रामचन्द्रले शुद्धचित्त लक्ष्मणलाई उपदेश दिनुभएको यथार्थ अमृतस्वरूप यो **रामगीता** ब्रह्माण्डपुराणअन्तर्गत अध्यात्मरामायणको अन्तिम अंश हो । यसै हुँदा यसका लेखक वेदव्यासजी हुनुहुन्छ । भगवान् शिवजीले देवी पार्वतीलाई यही सुनाउनुभएको हो ।

कसैले भन्नुहोला– यसको यथार्थ अर्थ त भगवान् शिवजी हुनुहुन्छ, त्यसको आधा पार्वती जान्नहुन्छ अनि त्यसको पनि आधा अर्थात् चौथाइ ब्रह्माजी जान्नुहुन्छ । यसै हुँदा चित्त शुद्ध पनि भएको तँलाई त अधिकारै छैन । यस्तो आफूले वुझ्दै नवुझेका विषयमा कलम चलाउनु त पाप हो । इत्यादि ।

तर उहाँलाई म कर जोरी बिन्ती गर्छु– जुन **रामगीता** जानेपछि उत्तिखेर नै चित्त हुन्छ भन्ने ब्रह्माण्डपुराणको वचनले नै मलाई उत्साह बढाएको हो । हो, कर्मकाण्डमा अनधिकारीले कर्म गरे पाप लाग्छ तर यो **रामगीता**को पाठ श्रद्धापूर्वक गर्नाले पापीको चित्त शुद्ध हुँदै आउँछ । पुड्को मानिसले आकाशको चन्द्रमालाई समात्न हात पसारेजस्तै उपहासको विषय भए पनि यो प्रयास हो **रामगीता**को मननले आफ्नो चित्त शुद्ध होस् भन्नाका लागि । कर्मयोगले नासिदिने मलदोष र भक्तियोगले विक्षेपदोष पनि यही **रामगीता**को मननले नष्ट हुन्छ । यसको खास अधिकारी त चित्तशुद्ध मुमुक्षु नै हो, फेरि यो **रामगीता**को लक्ष्य हो आवरणलाई अर्थात् अज्ञानलाई हटाउनु । यसै हुँदा सङ्क्षेपमा अज्ञानको नाश गर्ने उपाय यहाँ बताइएको छ ।

यसको अर्थ लेख्दा विशेष गरेर श्रीनागेश भट्टका शिष रामवर्माको संस्कृत टीकाको आश्रय मैले लिएको छु । अनि कहीं-कहीं तीन हिन्दी टीकाबाट पनि सहायता पाएको छु । ती टीकाहरूमध्ये पहिलो हो श्रीक्षितीशचन्द्रज्यूको, दोस्रो हो श्रीरामदासज्यूको र तेस्रो हो श्रीविष्णुदत्तज्यूको ।

गुरुरूपी पढी एकदुई ठाउँमा संशोधनको सुझाउ दिएर प्रकाशनका लागि प्रोत्साहन दिने विद्वद्वर श्रीकृष्णकान्त अधिकारीज्यूको म अत्यन्त ऋणी छु ।

जीवित हुँदा जुन पत्नी चित्रकलाले शालिग्रामपूजा गर्न लाग्दा मलाई यो यो **रामगीता** सुनाउँथिन् उनै दिवङ्गतको अन्तस्करणमा र जुन-जुन धनिकहरूको धनबाट यो प्रकाशित भएको छ उहाँहरूको हृदयमा पनि अखण्ड सुखशान्ति होस् भनी भगवान् अन्तर्यामीसँग प्रार्थना गर्दछु ।

# श्रीरामगीतामाहात्म्यम्

ब्रह्मोवाच

श्रीरामगीतामाहात्म्यं कृत्स्नं जानति शङ्करः ।
तदर्ध गिरिजा वेत्ति तदर्ध वेदम्यहं मुने ॥१॥
तत्ते किञ्चित् प्रवक्ष्यामि कृत्स्नं वक्तुं न शक्यते ।
यज्ज्ञात्वा तत्क्षणाल्लोकश् चित्तशुद्धिमवाप्नुयात् ॥२॥
श्रीरामगीता यत्पापं न नाशयति नारद ।
तन्न नश्यति तीर्थादौ लोके क्वापि कदाचन ।
तन्न पश्याम्यहं लोके मार्गमाणोऽपि सर्वदा ॥३॥
रामेणो पनिषत्-सिन्धु मुन्मथ्योत्पादितां मुदा ।
लक्ष्मणायार्पितां गीता-सुधां पीत्वाऽमरो भवेत् ॥४॥
जमदग्निसुतः पूर्व कार्तवीर्य-वधे-च्छया ।
धनुर्विद्यामभ्यसितुं महेशस्यान्तिकेऽवसत् ॥५॥
अधीयमाना पार्वत्या रामगीतां प्रयत्नतः ।
श्रुत्वा गृहित्वाऽऽशु पठन् नारायण-कलामगात् ॥६॥
ब्रह्महत्यादि पापानां निष्कृतिं याद वाञ्छति ।
रामगीतां मासमात्रं पठित्वामुच्यते नरः ॥७॥
दुष्प्रतिग्रह-दुर्भोज्य-दुरालापादि सम्भवम् ।
पापं यत्कीर्तनात्सद्यो रामगीता विनाशयेत् ॥८॥
शालिग्राम-शिलाग्रे च तुलस्यश्वत्थसन्निधौ ।
यतीनां पुरतस्तद्वद् रामगीतां पठेत्तु यः ।
स तत्फलमवाप्नोति यद् वाचोऽपि नागोचरम् ॥९॥

रामगीतां पठन् भक्त्या यः श्राद्धे भोजयेद् द्विजान् ।
तस्य ते पितरः सर्वे यान्ति विष्णोः परं पदम् ॥१०॥
एकादश्यां निराहारो नियतो द्वादशीदिने ।
स्थित्वाऽगस्त्यतरोर्मूले रामगीतां पठेत्तु यः ।
स एव राघवः साक्षात् सर्वदेवैश्च पूज्यते ॥११॥
विना दानं विना ध्यानं विना तीर्थावगाहनम् ।
रामगीतां नरोऽधीत्य तदनन्तफलं लभेत् ॥१२॥
बहुना किमिहोक्तेन शृणु नारद तत्त्वतः ।
यस्य विज्ञानमात्रेण वाञ्छितार्थफलं लभेत् ॥१३

# रामगीता

श्रीमहादेव उवाच

(श्रीमहादेव पार्वतीलाई आज्ञा हुन्छ)

**ततो जगन्मङ्गलमङ्गलात्मना**
**विधाय रामायणकीर्तिमुत्तमाम् ।**
**चचार पूर्वाचरितं रघूत्तमो**
**राजर्षिवर्यैरभिसेवितं यथा ॥१॥**

संसार-मङ्गल निमित्त सुमङ्गलात्मा
श्रीरामबाट अनि उत्तम कीर्ति गर्दै ।
पुर्खासरी हुन गयो सब चालमाल
राजर्षिले अघि यहाँ जसरी गरेथे ॥

जगत्को मङ्गल गर्ने मङ्गलस्वरूप भएका रघु राजाको कुलका उत्तम रामचन्द्रले उत्तम अर्थात् मोक्षसम्मको फल दिने हुनाले ज्यादै श्रेष्ठ वाल्मीकि आदिले बनाएको रावणको वध इत्यादि कथा भएको रामायणरूप कीर्ति गरेर आफ्ना पुर्खाहरूले र अरू श्रेष्ठ राजर्षिहरूले पनि गर्नुभएको प्रजाको पालन र सत्कथाको श्रवण आदि आचरण गर्नुभयो ।

('जगन्मङ्गलमङ्गलात्मा' को अर्को अर्थ संस्कृत टीकाकार राम बर्माले यस्तो पनि गर्नुभएको छ– जगत्को मङ्गल अर्थात् सगुण आनन्द तिनको आश्रय भएको मङ्गल अर्थात् निर्गुण आनन्द नै स्वरूप भएका अर्थात् अघिल्लो मङ्गल शब्दको अर्थ हो सगुण आनन्द ।

पछिल्लो मङ्गल शब्दको अर्थ हो निर्गुण आनन्द । निद्रा, मदिरा, आलस्य आदिबाट हुने सुख हो तमोगुणी । अरू विषयभोगबाट हुने सुख हो रजोगुणी । भक्ति, योग इत्यादिबाट हुने सुख हो सत्त्वगुणी, ब्रह्मानन्द हो निर्गुण । तैत्तिरीय श्रुति पनि भन्नुहुन्छ– त्यही आनन्दको मात्रा अरू भूतहरू भोग्दछन् ।)

**सौमित्रिणा पृष्ट उदारबुद्धिना**
**रामः कथाः प्राह पुरातनीः शुभाः ।**
**राज्ञः प्रमत्तस्य नृगस्य शापतो**
**द्विजस्य तिर्यक्त्वमथाह राघव ॥२॥**

सोद्धा उदारमति लक्ष्मणले पुराना
राम्रा कथा हुकुम भो अनि रामबाट ।
राजा प्रमत्त नृगलाई सराप पर्दा
तिर्यक् जुनी हुनुपर्‍यो जसरी अकस्मात् ॥

उदार शब्दको अर्थ हो गुरु र देवतामा विश्वास गर्ने अथवा दान गर्ने स्वभाव हुने । त्यस्तो उदार बुद्धि भएका सुमित्राका छोरा लक्ष्मणले सोधिएका रामले पहिलेका राजाहरूको शुभकथा भन्नुभयो । आफ्नो गाईको बथानमा मिसिन आएको पहिले ब्राह्मणलाई दान गरिएको गाई फेरि भूलले दान गर्ने नृग राजाले सरापबाट छेपारो हुनुपरेको कथा रघु राजाका पनाति रामले बताउनुभयो । (भूलले ब्राह्मणको गाई दान गर्दा त यस्तो भयो भने जानी-जानी ब्रह्मस्व हरे कस्तो होला ?)

**कदाचिदेकान्त उपस्थितं प्रभुं**
**राम रमा-लाजित-पाद-पङ्कजम् ।**
**सौमित्रि रासादित-शुद्ध-भावनः**
**प्रणम्य भक्त्या विनयान्वितोऽब्रवीत् ॥३॥**

एकान्तमा प्रभु कुनै दिन राज गर्दा
सीताजिले चरण-पङ्कज फेरि दाब्दा ।
सद्भावना विनयले सुत लक्ष्मणैले
बिन्ती गरे गरि प्रणाम त भक्तिसाथ ॥

कुनै दिन एकान्तमा राज भएका, रमा अर्थात् सीताजीले पाउ मिचिएका प्रभु रामलाई भक्तिसाथ नमस्कार गरेर अर्थात् गुरु मानी शरण परेर चित्त शुद्ध भएका अनि नम्र भएका लक्ष्मणले बिन्ती गर्नुभयो ।

**सौमित्रि उवाच**

(सुमित्राका छोरा लक्ष्मणले भन्नुभयो)

**त्वं शुद्ध-बोधोऽपि हि सर्व देहिना-**
**मात्मास्य धीशोऽसि निराकृतिः स्वयम् ।**
**प्रतीयसे ज्ञानदृशां महामते**
**पादाब्ज-भृङ्गा-हित सङ्ग-सङ्गिनाम् ॥४॥**

हो शुद्ध चेतन हजुर सबै जनाको
आत्मा र ईश अनि आकृतिहीन फेरि ।
हे बुद्धिमान् हजूर जानिनुहुन्छ ज्ञानी
पादाब्जका भ्रमर भक्त सुसङ्गबाट ॥

ठूलो अर्थात् सर्वविषयक बुद्धि भएका हे दाइ, हजुर शुद्ध चैतन्यस्वरूप होइबक्सिन्छ । जीवहरू चैतन्यकै प्रतिविम्ब हुनाले सारा शरीरधारीको आत्मा भइबक्सिन्छ । अन्तर्यामी ईश्वर पनि हजुर नै होइबक्सिन्छ । (वास्तवमा उपाधिको भेदले नियन्ता र नियम्यको भेद हो ।) हजुर निराकार होइबक्सिन्छ अर्थात् हामी जीवको जस्तो कर्माधीन शरीर छैन । हजुरको पाउरूपी कमलको भमराजस्तै भई चित्त अखण्डित

रूपले चढाइरहने भक्तहरूको सङ्गत गर्ने ज्ञान अर्थात् वेदान्त वाक्य नै दृष्टि भएका ज्ञानीहरूका हृदयमा आफैं प्रतीत होइबक्सिन्छ ।

**अहं प्रपन्नोऽस्मि पदाम्बुज प्रभो**
**भवापवर्ग तव योगिभावितम् ।**
**यथाऽञ्जसाऽज्ञानमपारवारिधिं**
**सुखं तरिष्यामि तथाऽनुशाधि माम् ॥५॥**

यी पाउका शरणमा प्रभु पर्छु ऐले
जो विश्व-मोक्षद र योगिविभावितैछन् ।
अज्ञान सागर अपार छिटै सुखैले
तर्ने उपाय त मलाई बताइबक्स्योस् ॥

हे प्रभु, संसारबाट मोक्ष दिने र योगीहरूले भावना गरिएको हजुरको चरणकमलको शरणमा म परेको छु । जसरी अपार अर्थात् पार गर्न मुस्किल अज्ञानरूपी समुद्र सजिलैसँग छिटो तर्दछु त्यस्तो शिक्षा मलाई बक्स्योस् ।

**श्रुत्वाऽप्य सौमित्रिवचोऽखिलं तदा**
**प्राह प्रपन्नार्तिहरः प्रसन्नधीः ।**
**विज्ञानमज्ञानतमः प्रशान्तये**
**श्रुतिप्रपन्नं क्षितिपालभूषणः ॥६॥**

त्यस्ता सबै वचन लक्ष्मणका सुनेर
ज्यादै प्रसन्न शरणागतदुख हर्ने ।
आज्ञा भयो नृपशिरोमणि रामबाट
अज्ञान नास्न श्रुतिसम्मत सार वाक्य ॥

लक्ष्मणको सबै वचन सुनेर शरण परेकाको दुःख नाश गरिदिने, प्रसन्न बुद्धि भएका अनि राजाहरूका गहनाजस्ता ज्ञानी रामले अज्ञानरूपी अन्धकार हटाउन वेदले कहिएको ज्ञान बताउन सुरु गर्नुभयो ।

**श्रीरामचन्द्र उवाच**

(रामचन्द्रले भन्नुभयो)

**आदौ स्ववर्णाश्रमवर्णिताः क्रियाः**
**कृत्वा समासादितशुद्धमानसः ।**
**समाप्य तत्पूर्वमुपात्त साधनः**
**समाश्रयेत् सद्गुरुमात्मलब्धये ॥७॥**

पैले त कर्म निज वर्ण र आश्रमैका
पूरा गरेर अति शुद्ध मनै तुल्याई ।
पारी समाप्त सब साधन ता लिएर
जाओस् भला गुरुकहाँ खुद बुझ्न आत्मा ॥

ब्राह्मणका क्रिया हुन् शम, दम इत्यादि स्वाभाविक कर्मका साथ पढ्नु, पढाउनु, यज्ञ गर्नु, यज्ञ गराउनु, दान दिनु, दान लिनु इत्यादि । क्षत्रियका कर्म हुन् शौर्य, तेज, धैर्य आदि स्वाभाविक कर्मका साथ पढ्नु, यज्ञ गर्नु, दान दिनु, प्रजाको पालन गर्नु इत्यादि । वैश्यका कर्म हुन् पढ्नु, यज्ञ गर्नु, दान दिनु, खेती गर्नु, गाई पाल्नु, व्यापार गर्नु इत्यादि । शूद्रका कर्म हुन् तीन वर्णको सेवा गर्नु अनि किसिम-किसिमका कालिगडी काम गर्नु । आश्रम पनि चार छन् । ब्रह्मचर्यमा वेद पढ्नु, गुरुको सेवा गर्नु इत्यादि कर्म बताइएका छन् । गृहस्थका नित्य र नैमित्तिक आदि कर्म विहित छन् । वानप्रस्थलाई तीर्थमा गएर उपासना आदिको विधान गरिएको छ । सन्न्यास हो अन्तिम आश्रम । यसरी वर्णधर्म र आश्रमधर्म पूरा गरी मन शुद्ध पारेर विवेक, वैराग्य, शम, दम आदि सम्पत्ति र

उत्तम मुमुक्षता यी चार साधनहरू लिएर सन्न्यास लिई आत्मज्ञानका लागि अर्थात् त्यो फल दिने तत्त्वमसि आदि महावाक्यको अर्थका विचारका लागि सद्गुरु अर्थात् अज्ञानको नाश गरिदिने श्रोत्रिय ब्रह्मनिष्ठ जीवन्मुक्तको शरणमा जाओस् । (यसबाट बुझिन्छ– पहिले आफ्नो चित्त शुद्ध गराउनुपर्छ । अनि ज्ञानी गुरुबाट महावाक्यको श्रवण गर्नुपर्छ अनि आत्मज्ञान हुन्छ । आफैंले खालि विचार गरेर ज्ञान हुँदैन ।)

**क्रिया शरीरोद्भवहेतुरादृता**
**प्रियाप्रियौ तौ भवतः सुरागिणः ।**
**धर्मेतरौ तत्र पुनः शरीरकं**
**पुनः क्रिया चक्रवदीर्यते भवः ॥८॥**

पैदा शरीर हुनुमा त छ कर्म हेतु
आसक्तका प्रिय र अप्रिय ती त हुन्छन् ।
ती पाप-पुण्यहरूबाट शरीर बन्छन्
तीबाट कर्म भवचक्रसरी कहिन्छ ॥

आदरपूर्वक पर्वजन्ममा गरिएको धर्म र अधर्मरूप कर्म नै शरीरसम्पत्ति हुनामा कारण हो । ज्यादै रागी अर्थात् विषयको इच्छा गर्ने पुरुषको ती धर्म र अधर्म प्यारा अर्थात् सुख पैदा गर्ने अप्यारा अर्थात् दु:ख पैदा गर्ने हुन्छन् । धर्म र पापले गर्दा त्यसको फल भोग्नाका लागि फेरि शरीर पैदा हुन्छ । त्यो शरीरबाट फेरि पाप र पुण्यरूप क्रिया हुन्छ । त्यसै हुँदा कहिले तलको भाग माथि जाने अनि कहिले माथिको भाग तल आउने चक्रजस्तै संसार चलिरहन्छ । यसरी आसक्तको सकामको संसार कहिल्यै पनि नष्ट हुँदैन ।

**अज्ञानमेवास्य हि मूलकारणं**
**तद्धानमेवात्र विधौ विधीयते ।**
**विद्यैव तन्नाशविधौ पटीयसी ।**
**न कर्म तज्जं सविरोधमीरितम् ॥९॥**

अज्ञान नै छ यसको खुद मूल हेतु
त्यो छोड्नुपर्दछ भनी विधिवाक्य भन्छ ।
विद्या त सक्छ त्यसलाई विनष्ट पार्न
सक्दैन कर्म त्यसबाट खडा भएको ॥

यो संसार छुटाउनाका लागि मूल कारण भएको अज्ञानलाई नै हटाउनुपर्छ भन्ने बताइएको छ । विद्या अर्थात् ज्ञान नै अज्ञानको नाश गर्न समर्थ हुन्छ । (जस्तो डोरी भान भएको सर्पको भ्रम हटाउनाका लागि यो डोरी हो भन्ने ज्ञान हुनुपर्छ ।) कसैले अज्ञानको नाश गर्न सक्दैन । आत्माको ज्ञानबाट खडा भएको शरीर आदिको अभिमानबाट हुने कर्म ज्ञानको विरोधी हो भन्ने बताइएको छ ।

**नाज्ञानहानिर्नच रागसङ्क्षया**
**भवेत्ततः कर्म सदोषमुत् भवेत् ।**
**ततः पुनः संसृतिरप्यवारिता**
**तस्माद् बुधो ज्ञान विचारवान् भवेत् ॥१०॥**

अज्ञानको क्षय हुँदैन न राग नास्छ
झन् कर्म दोषसहितै भइहाल्छ पैदा ।
संसार फेर त्यसबाट त रोकिँदैन
लागोस् तसर्थ बुध ज्ञान-विचारतर्फ ॥

विरोध नभएको हुँदा कर्मले अज्ञानको नाश हुँदैन, न त रागको नाश हुन्छ। कर्मको अनुष्ठानले त बरु अरू दोषी कर्म नै पैदा हुन्छ। दोषयुक्त कर्मद्वारा संसार कहिल्यै पनि रोकिँदैन। त्यसै हुँदा चित्त शुद्ध भएको मानिसले सारा कर्मलाई छोडेर विवेक र वैराग्यका साथ खालि वेदान्त वाक्यको विचार गरोस्। (जबसम्म अन्तस्करणमा मल र विक्षेप दोष रहन्छ तबसम्म निष्काम कर्म र भक्ति गर्नुपर्छ। मल र विक्षेप दोष हटी चित्त शुद्ध भएपछि चाहिँ खालि ज्ञानको अभ्यासतिर मात्र लाग्नुपर्छ। नत्र आवरण अर्थात् अज्ञान नष्ट हुन सक्दैन।)

**ननु क्रिया वेदमुखेन चोदिता**
**तथैव विद्या पुरुषार्थसाधनम्।**
**कर्तव्यता प्राणभृतः प्रचोदिता**
**विद्यासहायत्वमुपैति सा पुनः ॥११॥**

हो कर्म वेदमुखले त बताइएको
विद्या छ साधन त्यहीसरि मोक्ष मिल्न।
कर्तव्य हो मनुजको विधियुक्त कर्म
त्यो फेरि बन्दछ सहायक ज्ञानलाई॥

(अब ज्ञान नै मोक्षको कारण हो, ज्ञान र कर्म साथसाथै हुन सक्दैन भन्ने मतको कुरो यहाँ देखाइन्छ।) जस्तो वेदले ज्ञानलाई पुरुषार्थ अर्थात् मोक्षको साधन बताएको छ त्यस्तै कर्म पनि वेदले नै बताएको छ। (जस्तै बाँचुन्जेल अग्निहोत्र गर्नु, फेरि दुई पखेटा नभई चरो उड्न सक्दैन, त्यस्तै ज्ञान र कर्मले ब्रह्म पाइन्छ इत्यादि) अवश्य कर्तव्यरूपमा नित्य-नैमित्तिक कर्म बताइएको छ। त्यसै हुँदा ज्ञानको सहायक कर्म हुन्छ। (जस्तो घट पैदा गर्ने दण्ड र चक्रहरू सहायक हुन्छन्।)

**कर्माकृतौ दोषमपि श्रुतिर्जगौ**
**तस्मात् सदा कार्यमिदं ममुक्षुणा ।**
**ननु स्वतन्त्रा ध्रुवकार्यकारिणी**
**विद्या न किञ्चिन् मनसाप्यपेक्षते ॥१२॥**

छोड्दा त कर्म श्रुति लाग्दछ पाप भन्छन्
तस्मात् गरोस् दिनहुँ कर्म मुमुक्षु मान्छे ।
वास्ता त छोडि मनको ध्रुव कार्य गर्ने
विद्या स्वतन्त्र छ भनेर कुनै त भन्लान् ॥

पहिलो आधीमा पूर्वपक्षी समुच्चयवादीको मत र दोस्रो आधीमा सिद्धान्तको शङ्का यहाँ राखिएको छ । समुच्चयवादी भन्छन्– धर्म नगरे दोष अर्थात् पाप लाग्दछ भनी वेदैले बताएको छ । यसै हुँदा मुमुक्षु अर्थात् मोक्ष हुन इच्छा हुनेले ज्ञानको अभ्यास र कर्म सधैं सँगसँगै गर्नू ।

अब सिद्धान्तीको शङ्का देखाइन्छ । ननुको अर्थ यहाँ होइन भन्ने हो । स्वतन्त्र अर्थात् अरूको सहायताविना आफैं फल दिन सक्ने अनि ध्रुव अर्थात् अखण्डित कार्य अर्थात् मोक्ष गराउने विद्या अर्थात् ज्ञानले मनबाट पनि कुनै सहायता चाहँदैन । (जस्तो अँध्यारो नाश गर्नका लागि तेजले कसैको सहायता चाहँदैन ।) त्यस्तै अज्ञानको नाश गर्न मनको र कर्मको पनि सहायता ज्ञानले चाहँदैन । (हो, निष्काम कर्मले मलदोष र सगुण तथा निर्गुण उपासनाले विक्षेपदोष हटाएर चित्त शुद्ध गराउनुपर्छ । तर चित्त शुद्ध भएपछि कर्मको आवश्यकता छैन, जस्तो नदी तरेपछि नाउको आवश्यकता हुँदैन ।)

यहाँ कुनै टीकाकारले पहिलो आधीको विद्या शब्दको अर्थ उपासना हो, कर्म नगरी खालि उपासना गर्नेहरूको यो भनाइ हो भनी लेख्नुभएको छ ।

**न सत्यकार्योऽपि हि यद्वदध्वरः**
**प्रकाङ्क्षतेऽन्यानपि कारकादिकान् ।**
**तथैव विद्या विधितः प्रकाशितै-**
**र्विशिष्यते कर्मभिरेव मुक्तये ॥१३॥**

त्यो ठीक हैन तर यज्ञ छ सत्य कार्य
चाहन्छ कारक अरू पनि अङ्ग कार्य ।
विद्या त्यसै गरि विधानमुताबिकैका
सत्कर्म नै लिइ सहाय त मुक्ति दिन्छ ॥

(सिद्धान्तीलाई समुच्चयवादी भन्छन्–) 'यज्ञ गर्ने याज्ञिकको अक्षय पुण्य हुनछ' भन्ने वेदवाक्यले बताइएको स्थिर कार्य भएको यज्ञले जस्तो अरू कारक आदि अर्थात् टाढाबाट उपकार गर्ने कर्ता, कर्मकरण प्रयाज, अनुयाज आदि अङ्ग र देश-काल इत्यादिको पनि चाहना गर्छ; त्यस्तै वेदको कर्मकाण्ड भागले बताइएको कर्मको सहायताले नै ज्ञानले मुक्ति दिन समर्थ हुन्छ । (कर्मत्यागद्वारा हुँदैन । यसैले कर्म गर्नु नै कर्तव्य हो ।)

**केचिद् वदन्तीति वितर्कवादिनम्**
**तदप्यसद् दृष्ट-विरोध-कारणात् ।**
**देहाभिमानादभिवर्धते क्रिया**
**विद्या गताहङ्कृतितः प्रसिद्ध्यति ॥१४॥**

यस्तो कुरा पनि त भन्छ कुनै कुतर्की
त्यो हो असत् वचन खास विरोध गर्दा
देहाभिमान त हुँदा बढिहाल्छ कर्म
विद्या अहङ्कृति हटेपछि सिद्ध हुन्छ ॥

माथिका समुच्चयवादीको कुतर्कमा सिद्धान्ती दोष देखाउनुहुन्छ। केही वितर्कवादीहरू कर्म र ज्ञानको समुच्चयबाट अर्थात् कर्म र ज्ञान सँगसँगै गर्नाले मुक्ति हुन्छ भन्दछन्। त्यो कुरामा विरोध देखिएकाले ठीक होइन। यसमा सारा लोकले विरोधरूप कारण देख्छन्। त्यो विरोध यहाँ बताइन्छ। शरीरको अभिमानले कर्म हुन्छ अर्थात् आफू नभएको अनात्मा शरीर आदिमा आफू भन्ने अभिमान गर्नाले कर्म हुन्छ। अहङ्कार नष्ट भएपछि मात्र ज्ञान हुन्छ। अर्थात् अहङ्कार भए कर्म हुन्छ। यसै हुँदा कर्म र ज्ञानको समुच्चयमा विरोध सिद्ध हुन्छ।

**विशुद्ध-विधान-विरोचनाञ्चिता**
**विद्याऽऽत्मवृतिश्च स्मेति भण्यते।**
**उदेति कर्माऽखिलकारकादिभि-**
**र्निहन्ती विद्याऽखिलकारकादिकम् ॥१५॥**

अत्यन्त शुद्ध अनुभूत प्रकाशयुक्त
त्यो अन्त्य आत्ममय वृत्ति भनिन्छ विद्या।
सम्पूर्ण कारक भएपछि कर्म हुन्छ
विद्या त नास्छ सब कारक आदिलाई ॥

ज्यादै शुद्ध विज्ञान अर्थात् वेदान्तका महावाक्यहरूको आलोचना अर्थात् विचारले पुऱ्याइएको अथवा अत्यन्त शुद्ध अनुभवरूपी सूर्यले प्रकाशित चरम अर्थात् अन्तिम आत्मवृत्ति अर्थात् अन्तिम ब्रह्माकार वृत्तिलाई नै विद्या अर्थात् ज्ञान भन्दछन्। 'अखिलकारकादिभिः' अर्थात् सारा अङ्गसहित कर्ता, कर्म इत्यादि कारकले क्रिया सम्पन्न हुन्छ र फल दिने हुन्छ। तर ज्ञानले सारा कारक आदिलाई अर्थात् कर्तृत्व आदिलाई अर्थात् म कर्म गर्ने हुँ भन्ने अहङ्कार आदिलाई समेत नष्ट गरिदिन्छ अर्थात् ब्रह्माकार वृत्तिमा प्रतिफलित चैतन्यले नै अज्ञानको नाश गरिदिन्छ।

**तस्मात् त्यजेत् कार्यमशेषतः सुधी-**
**र्विद्याविरोधान्न समुच्चयो भवेत् ।**
**आत्मानुसन्धानपरायणः सदा**
**निवृत्तसर्वेन्द्रियवृत्तिगोचरः ॥१६॥**

छोडोस् तसर्थ सब कार्य त बुद्धिमान्ले
विद्याविरोध त हुँदा सँग हुन्न कर्म ।
लाग्नू सधैं फगत आत्मविचारतर्फ
हट्नू सबै विषयबाट न इन्द्रियैका ॥

त्यसै हुँदा चित्त शुद्ध भएको मुमुक्षुले सारा कर्म छोडोस् । ज्ञानसँग विरोध हुँदा समुच्चय अर्थात् सँगसँगै ज्ञान र कर्म हुन सक्दैन । इन्द्रिय नजिती आत्मातिर नफर्कने हुँदा इन्द्रियका विषय शब्द, स्पर्श, रूप, रस, गन्ध इत्यादिदेखि हटेर अर्थात् विषयमा आसक्त भएर सधैं आत्माको अनुसन्धानमा लागिरहोस् अर्थात् आत्मा भनेको के हो, त्यो कहाँ छ, कस्तो छ इत्यादि जिज्ञासाका साथ चिताइने विषय केही नभएको चैतन्य नै आत्मा हो भन्ने श्रवण र मनन गरी सारा विषयलाई छिनछिनमा छोड्ने अभ्यास सुरु गरोस् । जस्तो मालाको आधार धागो हेर्ने इच्छा हुनेले दुई फूलका बीचमा नियालेर हेरे धागो देखिन्छ, त्यस्तै मनको एउटा विषयाकार वृत्ति गएपछि अर्को वृत्ति उठ्न नदिए आत्माको अनुभव हुन्छ । यसरी यो अभ्यास बढाउँदै सजातीय आत्माकार वृत्तिको प्रवाह चलाइरहनु नै आत्माको अनुसन्धान हो । श्रवण, मनन, निदिध्यासन इत्यादि हो आत्माको अनुसन्धान ।

**यावच्छरीरादिषु माययात्मधीस्**
**तावद् विधेयो विधिवादकर्मणाम् ।**
**नेतोतिवाक्यैरखिलं निषिध्य तज्**
**ज्ञात्वा परात्मानमथ त्यजेत् क्रियाः ॥१७॥**

अज्ञानबाट जबसम्म शरीर आदि
आफू भनिन्छ तबसम्म त कर्म गर्नू ।
यो विश्व होइन भनेर गरी निषेध
त्यागनू क्रिया अनि बुझेर यथार्थ आत्मा ॥

जबसम्म आत्मा अर्थात् आफू नभएका शरीर, इन्द्रिय, प्राण, मन आदिको सङ्घात अनात्ममा माया (अज्ञान) द्वारा आफू भन्ने बुद्धि हुन्छ तबसम्म वेदले बताएका कर्महरू गरोस् । शरीर आदिमा आत्मभाव छुटेपछि म कर्ता र म भोक्ता भन्ने भाव गएपछि अर्थात् म शरीर, इन्द्रिय, प्राण, बुद्धि, चित्त, अहङ्कारदेखि भिन्न हुँ भन्ने बुझेपछि वेदिका नेति नेति अर्थात् कार्य होइन अनि कारण पनि होइन भन्ने वाक्यहरूले साराको निषेध गरेर चित्तशुद्धि भएपछि आत्मा चाहिँ सत्य हो भन्ने बुझी कर्महरू छोडोस् । विक्षेपको अभाव हो चित्तशुद्धि अथवा विवेक, वैराग्य, शम, दम, उपरति, तितिक्षा, समाधान, श्रद्धा र मुमुक्षुता । यी साधन छन् भने चित्त शुद्ध भएको ठहरिन्छ ।

**यदा परात्मात्मविभेदभेदक**
**विज्ञानमात्मन्यवमातिभास्वरम् ।**
**तदैव माया प्रविलीयतेञ्जसा**
**सरकारका कारणमात्मसंसृतेः ॥१८॥**

जैले त आफू र परात्मक भेद नास्ने
विज्ञान त्यो चहकिलो मनभित्र भास्छ ।
संसारको प्रथम कारण साङ्ग माया
तैले त नष्ट सहजै हुन जान्छ झट्ट ॥

जब परमात्मा र जीवको भेद हटाउने अर्थात् परमात्माको उपाधि माया हो अनि जीवको अविद्या अन्तःकारक हो भन्ने भेदलाई हटाउने प्रत्यक्ष ज्ञान अर्थात् अनुभव अन्तस्करणमा उदाउँछ तब सकारक अर्थात् जन्मान्तर-पापसहित अर्थात् जन्मान्तर गराउने व्यापार आदिले सहित संसारको कारण माया छिटै नष्ट हुन्छ ।

**श्रुति-प्रमाणाभिविनाशिता च सा**
**कथं भविष्यत्यपि कार्य-कारिणा ।**
**विज्ञान-मात्रादमला-द्वितीयस्**
**तस्मादविद्या न पुनर्भविष्यति ॥१९॥**

वेद प्रमाणहरूबाट बिनासिएको
माया हुनेछ कसरी अनि कार्य गर्ने ?
विज्ञान मात्र अनि निर्मल अद्वितीय
त्योबाट फेरि रहँदैन यहाँ अविद्या ॥

'त्यो तिमी हौ' इत्यादि वेदरूप प्रमाणले आत्मा र परमात्माको एकताद्वारा नष्ट गरिएको अविद्याले फेरि कसरी द्वैत प्रपञ्चरूप कार्य गर्न सक्ला ? निदिध्यासनको परिपाकबाट भएको अनुभवरूप तथा शुद्ध र अद्वितीय चैतन्यबाट नष्ट भएको अज्ञान फेरि पैदा हुन सक्दैन । (जस्तो डोरीको अज्ञानले भएको सर्पको भ्रम डोरीको यथार्थ ज्ञान भएपछि फेरि हुन सक्दैन ।)

**यदि स्म नष्टा न पुनः प्रसूयते**
**कर्ताहमस्येति मतिः कथं भवेत् ।**
**तस्मात् स्वतन्त्रता न किमप्यपेक्षते**
**विद्या विमोक्षाय विभाति केवला ॥२०॥**

जन्मन्न फेरि यदि नष्ट हुँदा अविद्या
कर्ता म ता हुँ भनि के गरि बुद्धि होला ।
विद्या स्वतन्त्र छ तसर्थ सहाय केही
चाहन्न केवल स्वयम् दिन सक्ला मोक्ष ॥

(कर्मको सहायताको वास्ता नगर्ने विद्या नैं मोक्षको कारण हो भन्ने रहस्य फेरि युक्तिपूर्वक यहाँ बताइन्छ ।) यदि आत्माको ज्ञानले नष्ट भएको अविद्या (अज्ञान) फेरि पैदा हुँदैन भन्ने कारणरूप त्यो अज्ञान नभएपछि कार्यरूप म कर्ता हुँ भन्ने अहङ्कार कसरी होला ? अहङ्कार नभएपछि कर्म नहुने हुँदा स्वतन्त्र भएको विद्याले कर्म इत्यादि कुनै कुराको वास्ता गर्दैन । केवल ज्ञानले नै मोक्षरूप फल दिन सक्छ ।

**सा तैत्तिरीय-श्रुतिराह सादरं**
**न्यासं प्रशस्ताखिलकर्मणां स्फुटम् ।**
**एतावदित्याह च वाजिनां श्रुति**
**ज्ञानं विमोक्षाय न कर्मसाधनम् ॥२१॥**

ती तैत्तिरीय श्रुति आदरसाथ भन्छन्
सम्पूर्ण कर्महरू त्याग भनी यथार्थ ।
शाखा त वाजसनिको पनि यत्ति भन्छन्
त्यो ज्ञान मोक्ष दिन सक्दछ कर्म हैन ॥

अर्थवाद वाक्यद्वारा (स्तुति गर्ने वाक्यले) त्यागको महत्त्व त्यो प्रसिद्ध तैत्तिरीय उपनिषद्ले आदरका साथ भनेको छ अर्थात् कर्मले, सन्तानले, धनले मोक्ष हुँदैन; किन्तु सर्वत्यागले मात्र कसैले अमृतत्व

अर्थात् मोक्ष पाए । वाजसनेयीको श्रुति अर्थात् बृहदारण्यक उपनिषद्ले पनि निश्चय नै 'यति नै अमृतत्व हो इत्यादि वाक्यबाट ज्ञान नै मोक्ष गराउन समर्थ छ, मोक्षको साक्षात् साधन कर्म होइन' भन्ने बताउँछ ।

**विद्यासमत्वेन तु दर्शितस्त्वया**
**क्रतुर्न दृष्टान्त उदाहृतः समः ।**
**फलैः पृथक्त्वाद् बहुकारकैः क्रतुः**
**संसाध्यते ज्ञानमतो विपर्ययम् ॥२२॥**

विद्यासमान छ भनी क्रतुको तिमीले
दृष्टान्त जो अघि दियौ फलभिन्नताले ।
त्यो ठीक हैन अनि कारक धेरबाट
सिद्धै गरिन्छ क्रतु ज्ञान त छैन त्यस्तो ॥

(कर्मले अहङ्कार गराउँछ र ज्ञानले अहङ्कारलाई हटाउँछ भन्ने कर्म र ज्ञानको विषमता देखाएर फलमा पनि कर्म र ज्ञानको विषमता छ भन्ने यो श्लोकमा बताइन्छ ।) हे समुच्चयवादी अर्थात् कर्म र ज्ञान साथसाथै हुन्छ भन्ने हे वादी, तपाईंले जुन कर्म अग्निष्टोम आदि यज्ञलाई ज्ञानजस्तै हो भनी जुन समता (तेह्र श्लोकमा) देखाउनुभयो त्यो दृष्टान्त मिलेन । वेदले बताएको हुँदा यज्ञ पनि ज्ञानजस्तै हो भन्ने तपाईंको अनुमान दृष्टान्त नहुनाले ठीक होइन । यदि गाग्रो बनाउनुरूप फलमा दण्ड र चक्रजस्तै मोक्षरूप फलका लागि विद्या र कर्म उस्तै हुन् भन्नुहुन्छ भने पनि फल भिन्न-भिन्न हुनाले दृष्टान्त मिलेन । फेरि यज्ञ भित्री अहङ्कार आदिबाट र बाहिरी देश, काल आदिबाट सिद्ध हुन्छ । तर ज्ञान त त्यसको उल्टो छ अर्थात् अहङ्कार, देश, काल इत्यादिबाट ज्ञान हुँदैन । बरु तिनलाई छोडेपछि मात्र ज्ञान हुन्छ ।

सप्रत्यवायोह्यहमित्यनात्मधो-
रज्ञप्रसिद्धा नतु तत्त्वदर्शिनः ।
तस्माद् बुधैस् त्याज्यमविक्रियात्मभि
विधानतः कर्म विधिप्रकाशितम् ॥२३॥

त्याग्दा त कर्म हुन जान्छू म प्रत्यावायी
भन्ने त अज्ञ जन हो खुद हैन ज्ञानी ।
छोड्नू तसर्थ अविकारि मनै भएका
मोक्षार्थिले सकल वैदिक कर्मलाई ॥

(कर्म नगर्दा पाप लाग्छ, यसैले कर्म गर्नैपर्छ भन्नु ठीक होइन किनभने) कर्म त्याग्नाले मलाई प्रत्यवाय अर्थात् पाप लाग्नेछ भन्ने बुद्धि पनि अनात्मालाई आफू ठान्ने चित्त शुद्ध नभएका अज्ञानीको हो, तत्त्वज्ञानीको होइन । किनभने ज्ञानीमा अहङ्कार हुँदैन । पाप आदि त अहङ्कारले बोकेको भारी हो । अर्थात् यहाँ अर्को किसिमबाट पनि अर्थ गर्न हुन्छ– आफू नभएको शरीर आदिमा म भन्ने बुद्धि गर्नाले प्रत्यवाय लाग्दछ । यस्तो अज्ञानीहरूमा प्रसिद्ध छ । ज्ञानीमा होइन । त्यसै हुँदा सकाम कर्मिष्ठहरूका लागि वेदले यसरी गर्नू भनेर बताएका कर्महरूलाई चित्त शुद्ध भएका बुद्धिमान्हरूले त्यागिदिनू ।

श्रद्धान्वितस्तत्त्वमसीति वाक्यतो
गुरोः प्रसादादपि शुद्धमानसः ।
विज्ञाय चैकात्म्यमथात्मजीवयोः
सुखी भवेन् मेरुरिवा प्रकम्पनः ॥२४॥

श्रद्धा गरी खुद तिमी त्यही हौ त भन्ने
सद्वाक्यबाट गुरुको त प्रसादबाट ।
भै शुद्धचित्त बुझि ईश्वर, जीव एक
निष्कम्प मेरुसरि होस् सुखरूप पूर्ण ॥

(कर्म र भक्तिले चित्त शुद्ध भइसकेको मुमुक्षुको कर्तव्य यहाँ बताइन्छ ।) गुरु र शास्त्रको वचनमा विश्वास हो श्रद्धा । त्यस्तो श्रद्धालु अनि चित्त शुद्ध भइसकेको मुमुक्षुले सेवा गरेर प्रसन्न भएका गुरुको निगाहले (त्यो परमात्मा तिमी हौ) भन्ने महावाक्यबाट जीव र परमात्मा एक हुन् भन्ने बुझी अर्थात् मनन र ध्यानको परिपाकबाट साक्षात् अनुभव गरी सुमेरु पर्वतजस्तै कहिल्यै पनि नहल्लिने भएर अर्थात् जस्तोसुकै आइपर्दा पनि विकाररहित भएर सुखी होओस् । (अर्थात् म वास्तवमा ब्रह्मस्वरूप हुँ । शरीर आदिले युक्त विकारी जीव होइन) भनी प्रत्यक्ष साक्षात्कार गरी सुखी होस् ।

**आदौ पदार्थावगतिर्हि कारणं**
**वाक्यार्थविज्ञान विधौ विधानतः ।**
**तत्त्वं पदार्थौ परमात्मजीवका**
**वसीति चैकात्म्यमथा नयोर्भवेत् ॥२५॥**

पैले त अर्थ पदको बुझिहाल्नु हेतु
वाक्यार्थ बुझ्न हुन जान्छ विधानबाट ।
'तत्' हुन्छ ईश्वर र त्वपद जीववाची
हो एकता यि दुईको 'असि' नै नभन्दा ॥

(महावाक्यको विवरण गर्नाका लागि हरेक पदको अर्थ बुझिन्छ भन्ने यहाँ देखाइन्छ ।) पहिले हरेक पदको अर्थ बुझ्न नै प्रमादरहित

भएर वाक्यको अर्थ बुझ्नुमा कारण हुन्छ । यहाँ 'तत् त्वं असि' यो महाकाव्यको अर्थ बुझ्नका लागि 'तत्' को अर्थ ईश्वर हो । 'त्वं' को अर्थ जीव र 'असि' को अर्थ यी दुईको एकता हो भन्ने पदार्थ बुझेपछि मात्र तिमी परमात्मा हौ भन्ने वाक्यको अर्थ बुझिन्छ ।

**प्रत्यक् परोक्षादि विरोधमात्मनो**
**विहाय सङ्गृह्य तयोश्चिदात्मताम् ।**
**संशोधितां लक्षणया च लक्षितां**
**ज्ञात्वा स्वमात्मानमथा द्वयो भवेत् ॥२६॥**

प्रत्यक् छ जीव परमेश्वर छन् परोक्ष
इत्यादि छोडि दुइको लिइ चित्स्वरूप ।
संशोधितै अनि त लक्षित लक्षणाले
आत्मा स्वयम् त्यहि बुझेर त एक होओस् ॥

सर्वज्ञ भएका परमात्माको र अल्पज्ञ जीवको एकता कसरी हुनु भन्ने शङ्काको समाधान यहाँ गरिन्छ । अहम्-बुद्धिले प्रत्यक्ष गरिएको सुखी तथा दुःखी जीवको र परोक्ष भएका अनि सारा क्लेशले रहित ईश्वरको विरोधलाई छोडेर युक्तिद्वारा संशोधन गरी अभिधाशक्तिद्वारा हुने वाच्य अर्थको शक्ति नभए पनि लक्षणाशक्तिद्वारा लक्षित शुद्ध चैतन्यरूपता मात्रलाई लिई परम्पराका विरुद्ध अंशलाई त्यागेर एउटै चैतन्य वस्तु हो भन्ने बुझी दुई नहोस् अर्थात् एक होस् । अर्थात् पदको अर्थ बुझाउँदा तीन शक्ति हुन्छन्– अभिधा, लक्षणा र व्यञ्जना । अभिधाको वाच्य अर्थ गर्दा मिलेन भने लक्षणा गर्नुपर्छ । 'त्वं' पदको जीव अर्थ र 'तत्' पदको ईश्वर अर्थ हो वाच्य । तर प्रत्यक्ष तथा अल्पज्ञ र परोक्ष तथा सर्वज्ञ आदि अज्ञानले कल्पित विशेषणको विरोध भएकाले

विशेषणका ती परम्पराका विरुद्ध अंशहरूलाई छोडी लक्षणाद्वारा बुझाइएको चैतन्यमात्रको एकता हुन्छ। 'त्वं' पदको लक्ष्य अर्थ अन्नमय आदि पाँच कोश उपाधि नभएको शुद्ध साक्षिचैतन्य र 'तत्' पदको लक्ष्य अर्थ हो माया उपाधि नभएको शुद्ध चैतन्य, यसो गर्दा अकल्पित विशेष्य चैतन्य-चैतन्य एकता हुन कुनै बाधा पर्दैन। यसरी 'त्वं' र 'तत्' पदको शोधन गरेर जीव ब्रह्मरूप हुन्छ।

भगवान् शङ्कराचार्यले जीव ईश्वरको लक्षण यसरी पनि दर्साउनुभएको छ । अर्थात् अविद्या, त्यसमा परेको शुद्ध चैतन्यको प्रतिविम्ब कूटस्थ शुद्ध चैतन्य यी तीनको मिलन हो जीव । यो 'त्वं' पदको वाच्य 'त्वं' पदको शोधन गर्नुको अर्थ हो र विद्या र चैतन्यको प्रतिविम्बलाई त्याग गरी विविक्तै शुद्ध चैतन्यको मात्र अनुभव गर्नु । यही शुद्ध साक्षी चैतन्य हो 'त्वं' पदको लक्ष्य अर्थ । त्यसै गरी माया, मायामा परेको शुद्ध चैतन्यको प्रतिविम्ब र तिनको अधिष्ठान शुद्ध चैतन्य यी तीनको मिलन हो ईश्वर । यही हो 'तत्' पदको वाच्य अर्थ । माया र त्यसमा परेको चैतन्यको प्रतिविम्बलाई त्याग गरे शेष रूपमा केवल शुद्ध चैतन्य नै बाँकी रहन्छ। यो नै हो 'तत्' पदको लक्ष्य अर्थ। दुवैको लक्ष्य अर्थलाई लिए एकता सिद्ध भइहाल्छ। यो विवेकपूर्वकको ज्ञानबाट नै 'त्वं' र 'तत्' पदको एकता सिद्ध हुन्छ जस्तो घटाकाश र मठाकाशको एकताका लागि घट र मठरूप दुवै उपाधिलाई त्याग्नुपर्छ ।

**एकात्मकत्वाज्जहती न सम्भवेत्**
**तथाऽजहल्लक्षणता विरोधतः ।**
**सोयं पदार्थ विव भागलक्षणा**
**युज्येत तत्त्वं पदयोरदोषतः ॥२७॥**

एकात्मकै खुद हुँदा जहती हुँदैन
बन्दा विरोध अजहत् पनि यो हूँदैन ।
त्यो यो पदार्थसरि भाग त लक्षणा नै
योग्यै छ तत्पद र त्वं पदको मिलान ॥

लक्षणको स्वरूप यहाँ बताइन्छ । जीव र ईश्वरको एक चैतन्यस्वरूप भएको हुनाले जहल्लक्षणा अर्थात् आफ्नो अर्थलाई छोड्ने लक्षणा यहाँ हुन सक्दैन । जहत्को अर्थ हो छोड्ने । जस्तो कसैले वाग्मतीमा मेरो घर छ भन्यो भने पानीको प्रवाहरूप वाग्मतीको वाच्य अर्थ मात्र गरे विरोध हुन जान्छ किनभने पानीको प्रवाह बहिरहेको ठाउँमा कसैको पनि घर बन्न सक्दैन । यसै हुँदा जहल्लक्षणाद्वारा वाग्मतीको किनारमा भन्ने लक्ष्य अर्थ गर्नुपर्छ । पानीको प्रवाहरूप वाच्य अर्थलाई छोडेको हुँदा यो जहल्लक्षणा हो । तर यहाँ जीवन र ईश्वरको एक चैतन्यस्वरूप हुँदा त्यस्तो वाच्य अर्थलाई बिलकुल छोड्ने जहल्लक्षणा गर्नु हुँदैन । चैतन्यलाई नै छोडे त कसको एकता गर्ने ? त्यस्तै अजहल्लक्षणा अर्थात् वाच्य अर्थलाई नछोड्ने लक्षणा पनि यहाँ गर्न मिल्दैन । जस्तो कागहरूबाट दही रक्षा गर भन्दा रक्षक मानिसले कुकुर दही खान आयो भने पनि हटाउनुपर्छ । यहाँ काग भनेर दही नास्ने कागलाई नछोडी अरू सबै प्राणीलाई लिनुपर्छ । तर यहाँ विशेषण अर्थात् सर्व र अल्प, परोक्ष र अपरोक्ष आदिको मात्र त्याग भएकाले सर्वथा आफ्नो अर्थको त्याग भएको छैन । यसै हुँदा अजहल्लक्षणा पनि विरोध पर्ने हुनाले यहाँ हुँदैन अर्थात् जीव र ईश्वरको वाच्य अर्थरूप परस्परमा विरुद्ध अंश रहेको हुँदा अजहल्लक्षणा पनि हुन सक्दैन । यसै त्यो यही हो भन्नेझैं भागलक्षणा अर्थात् भाग-त्यागलक्षणा गर्नुपर्छ । केही कुरा लिने अनि केही कुरा छोड्ने लक्षणालाई भाग-त्यागलक्षणा गर्नुपर्छ । केही कुरा लिने अनि केही कुरा छोड्ने लक्षणालाई भाग-त्यागलक्षणा भन्दछन् । बाटामा कुनै मानिस झट्ट देख्दा यो उही पोहोर

कोशीमा देवदत्त देखेको हो भन्ने मनले विचार गर्दा काशीको धोती-कमिज लाएको आदि विशेषण र यहाँको लुगा, कोट लगाएको आदि विशेषण छोडी विशेष्य देवदत्तलाई मात्र लिइन्छ । यहाँ पनि सर्वज्ञ ईश्वरको सबै परोक्ष आदि विशेषण र अल्पज्ञ जीवको अल्प आदि विशेषण हटाएमा विशेष्यको अर्थात् चैतन्य-चैतन्यको एकता हुन्छ । यसरी भागलक्षणा गरे 'तत्' र 'त्वं' पदको एकतामा दोष हुँदैन । उत्तम अधिकारीलाई गुरुबाट महावाक्यको श्रवण हुनासाथ ज्ञान भइहाल्छ । गुरु र शास्त्रको वाक्यमा पूरा श्रद्धा गर्ने चार साधन भएको उत्तम अधिकारी हो ।

**रसादि-पञ्जीकृत-भूत-सम्भवम्**
**भोगालयं दुःख-सुखादि-कर्मणाम् ।**
**शरीरमाद्यान्तव दादि-कर्म-जं**
**मायामयं स्थलमुपाधिमात्मनः ॥२८॥**

पाँचै मिसाइ पृथ्वीहरूबाट बन्ने
गर्ने त भोग सुखदुःख, क्रियाहरूको ।
मर्ने र जन्मयुत प्राक्तन कर्म जान
हो देह मायिक निजी त उपाधि ठूलो ॥

(उपाधिहरू छोड्नाका लागि स्थूल अर्थात् मोटो उपाधि पहिले यहाँ बताइन्छ ।) पञ्जीकरण हो पाँच आकाश, वायु, तेज, जल, पृथ्वी मिसाउनु । (पञ्जीकरण गर्ने तरिका यस किसिमको बताइन्छ– आकाशको दुई भाग लगाएर एक भाग आकाशमा राखिन्छ । अर्को आधा भागको चाहिँ चार भाग लगाएर एक भाग वायुमा, दोस्रो भाग तेजमा, तेस्रो भाग जलमा र चौथो भाग पृथ्वीमा मिसाइन्छ । अरू वायु आदि चार महाभतहरूको पनि आकाशको जस्तै गरी भाग लगाइन्छ । यसरी

आकाश, वायु, तेज, जल र पृथ्वीहरू मिसाउनुलाई पञ्जीकरण भन्दछन् ।) पञ्जीकरण गरिएका पृथ्वी आदि पाँच महाभूतबाट पैदा भएको, पाप र पुण्यबाट पैदा हुने, दुःख र सुखरूप भोगको घर भएको, उत्पत्ति र नाश हुने पहिले गरिएका कर्महरूबाट खडा भएको, मूल कारण माया भएको यो स्थूल शरीर आत्माको मोटो उपाधि हो । (यसो हुँदा स्थूल शरीर आफू होइन ।)

**सूक्ष्मं मनो–बुद्धि–दशेन्द्रियैर्युतं**
**प्राणै अपञ्जीकृत भूत सम्भवम् ।**
**भोक्तुः सुखादेरनुसाधनं भवेत्**
**शरीरमन्यद् विदुरात्मनो बुधाः ॥२९॥**

हो सूक्ष्म देह मन, बुद्धि, दशेन्द्रियैले
संयुक्त प्राणहरूले पनि फेरि भन्दछन् ।
जो हुन्छ साधन सुखादि त भोग गर्दा
उत्पन्न पाँच त अमिश्रित भूतबाट ॥

आत्माको उपाधि यहाँ बताइन्छ । (यसलाई लिङ्गशरीर पनि भन्दछन् ।) सङ्कल्प गर्ने मन, निश्चय गर्ने बुद्धि तथा दस इन्द्रिय अर्थात् कर्ण (कानमा रहने इन्द्रिय), त्वक् (छालामा रहने इन्द्रिय), नेत्र (आँखामा रहने इन्द्रिय), घ्राण (नाकमा रहने इन्द्रिय), रसना (जिब्रामा रहने इन्द्रिय, वाक् (बोल्ने इन्द्रिण), हातखुट्टा पायु, उपस्थ र पाँच प्राण भएको (अर्थात् यी सत्र चीजका जमात) जो पञ्जीकरण नगरिएको पाँच महाभूत अर्थात् आकाश, वायु, तेज, जल र पृथ्वीको तन्मात्राबाट पैदा भएको, जीवको सुखदुःख आदिको साधन भएको आत्माको दोस्रो उपाधि सूक्ष्म शरीर हो । यसैले यो आत्मा होइन । चित्त र अहङ्कार यहाँ मन

र बुद्धिभित्र नै अन्र्भूत ठानिएका छन्। तर कसैले चित्त र अहङ्कारसमेतको परिगणन गरी उन्नाइसको जमातलाई सूक्ष्म शरीर भनेका छन्।

**अनाद्य निर्वाच्यमपीह कारणं**
**माया प्रधानं तु परं शरीरकम्।**
**उपाधि भेदात्तु यतः पृथक् स्थितं**
**स्वात्मानमात्मन्यवधारयेत् क्रमात् ॥२०॥**

निर्वाच्य होइन अनादि छ फेरि जो ता
माया प्रधान अनि कारण हो शरीर।
जो भिन्न हो सब उपाधि विभेदबाट
आत्मा छ त्यो भनि गरोस् मनमा अठोट ॥

(ईश्वरको उपाधि यहाँ बताइन्छ।) आदि नभएको तर ज्ञानद्वारा नासिने, सत् अथवा असत् भनेर वचनद्वारा भन्न नसकिने, सारा प्रपञ्च पैदा गर्ने कारणस्वरूप भएको माया उत्कृष्ट शरीर हो। उपाधिका भेदले अर्थात् अन्तस्करण र मायाका भेदले एउटै चैतन्य भिन्न जस्तो भई जीव र ईश्वर भन्ने भेद बुद्धिको विषय भएको छ। यसै हुँदा लक्षणा उपाधिको त्याग गरेर आफ्नो आत्मालाई क्रमैले अर्थात् श्रवण, मनन, निदिध्यासनको क्रमले अखण्डित अन्तस्करणमा अभेदरूपले बुझोस्। कुनै टीकाकारले यो कारण पनि जीवको नै तेस्रो उपाधि भनी अर्थ गरेका छन्। कसैले चाहिँ संसारको कारण सूक्ष्म शरीर हो भनी ती दुईबाट उपाधिबाट भिन्न स्वभाव भएको आत्मालाई बिस्तारै-बिस्तारै जान्नुपर्छ भनेका छन्।)

**कोशेष्वय तेषु तु तत्तदाकृति-**
**र्विभाति सङ्गात् स्फटिकोपलोऽयथा।**
**असङ्गरूपोऽयमजो यतोऽद्वयो**
**विज्ञायतेऽस्मिन् परितो विचारिते ॥३१॥**

ती पाँच कोशहरूमा तिनझैं भएर
भानै हुने स्फटिक नै सरि सङ्गबाट ।
आत्मा-असङ्ग अज अद्वय खास
जानिन्छ यो सब विचार गरे यथार्थ ॥

(यहाँ माथि बताएको विचारको फल बताइन्छ ।) अन्नमय, प्राणमय, मनोमय, विज्ञानमय र आनन्दमय यी पाँच कोश हुन् । स्थूल शरीरलाई अन्नमय कोश भन्दछन् । प्राण, अपान, उदान, समान र व्यान यी पाँच प्राण तथा पाँच कर्मेन्द्रियलाई प्राणमय कोश भन्दछन् । मन र पाँच ज्ञानेन्द्रियलाई मनोमय कोश भन्दछन् । बुद्धि र पाँच ज्ञानेन्द्रियलाई विज्ञानमय कोश भन्दछन् । सगुण आनन्दलाई आनन्दमय कोश भन्दछन् । सत्त्व, रज र तमको भेदले त्यो तीन किसिमको छ । स्थिर बुद्धिको प्रसन्नताबाट भएको सुखलाई सात्त्विक भन्दछन् । विषय इन्द्रियको संयोगबाट हुने सुख राजस हो । निद्रा, आलस्य र प्रमादबाट भएको सुख चाहिँ तामस हो । यी पाँच कोशहरूमा त्यही-त्यही आकारले अर्थात् ती कोशहरूजस्तै भएर यो आत्मा अज्ञानीलाई भान हुन्छ । जस्तो स्फटिक जुन रङको उपाधि नजिकमा छ उस्तै देखिन्छ । जपा पुष्प नजिकमा छ भने रातोजस्तो देखिन्छ । नीलकमल नजिकमा छ भने नीलोजस्तो देखिन्छ । त्यस्तै अन्नमय कोशको सङ्गबाट मोटो, दुब्लो इत्यादि भान हुन्छ । प्राणमय कोशको सङ्गबाट भोको, तिर्खाउनु इत्यादि भान हुन्छ । मनोमय कोशको सङ्गबाट सङ्कल्पकर्ता, सुखी, दुःखी इत्यादि भान हुन्छ । विज्ञानमय कोशको सङ्गबाट कर्ता निश्चयकर्ता भान हुन्छ र आनन्दमय कोशको सङ्गबाट भोक्ता भन्ने भान हुन्छ । तर महावाक्य राम्ररी विचार गरेमा अनि शरीरहरूदेखि आत्मा भिन्न हो भन्ने विचार गरेमा यो आत्मा कसैसँग नमिलेको नजन्मने र एक भन्ने बुझिन्छ ।

**बुद्धेस्त्रिधा वृत्तिरपीह दृश्यते**
**स्वप्नादिभेदेन गुणत्रयात्मनः ।**
**अन्योन्यतोऽस्मिन् व्यभिचारतो मृषा**
**नित्य परे ब्रह्मणि केवले शिवे ॥३२॥**

स्वप्नादि भेदमय हो जुन तीन वृत्ति
त्यो ता गुणत्रयमयै खुद बुद्धिको हो ।
ती हुन् परस्पर झुटा व्यभिचारयुक्त
यी नित्य केवल सदाशिव ब्रह्ममा त ॥

(जाग्रत् आदि अवस्था बुद्धिको धर्म हो आत्माको होइन भन्ने यहाँ बताइन्छ ।) यी आत्मामा जाग्रत्, स्वप्न र सुषुप्तिका भेदले जुन तीन किसिमको वृत्तिको भान हुन्छ त्यो पनि सत्त्व, रज र तम यी तीन गुणरूप भएको धर्म हो । तर यी तीन अवस्थाको परस्परमा व्यभिचार भएकाले अर्थात् एक अवस्थामा अर्को अवस्था नरहेकाले (जस्तो रजोगुणी स्वप्न र तमोगुणी सुषुप्तिमा सत्त्वगुणी जाग्रत् रहँदैन, त्यस्तै स्वप्नमा जाग्रत् र सुषुप्ति रहँदैन अनि सुषुप्तिमा जाग्रत् र स्वप्न छैन ।) तर आत्मा नित्य अर्थात् उत्पत्ति र नाशले रहित सधैं रहिरहने वस्तु हो, तीन गुणदेखि पर हो, व्यापक हो, केवल अर्थात् असङ्ग हो, शिव अर्थात् आनन्दरूप हो । यस्तो एकरस आत्मामा तीन अवस्था छैनन् । आत्मा त यी नाशवान् तीन अवस्थाको प्रकाशक मात्र हो । (यसरी केलाएमा विवेकी पुरुषलाई जाग्रतेको सुख, दुःख आदिले छुँदैन र निर्विकार भएर रहन्छन् । वास्तवमा जाग्रत् आदि अवस्था भएकै होइन । जस्तो डोरीमा भान भएको सर्प माला, लट्ठी, जलधारा इत्यादि कुनै पनि होइन ।)

**देहेन्द्रिय-प्राण-मनश्चिदात्मनां**
**सङ्घादजस्रं परिवर्तते धियः ।**
**वृत्तिस्तमो मूलतयाऽज्ञलक्षणा**
**यावद् भवेत्तावदसौ भवोद्भवः ॥३३॥**

चैतन्य, इन्द्रिय, शरीर मनै र प्राण
सङ्घातबाट अनि चल्दछ बुद्धिवृत्ति ।
अज्ञान-लक्षण तमो-गुण-मूलताले
हुन्जेल वृत्ति, भव-जन्म हुँदै रहन्छ ॥

(यो श्लोकमा छोड्नका लागि संसारको मूल कारण भएको वृत्ति बताइन्छ ।) शरीर स्थूल-सूक्ष्म, कारण शरीर, ज्ञानेन्द्रिय पाँच, पाँच प्राण, मन, बुद्धि, चित्त, अहङ्कार र चैतन्य आत्माको समूहबाट (यी सब मिलेर तादात्म्य अभ्यासले गर्दा) बुद्धिको वृत्ति हरबखत परिवर्तन भइरहन्छ अर्थात् विभिन्न विषयमा तदाकार भइरहन्छ । जहिलेसम्म वृत्तिले घट, पट आदि पदार्थको ग्रहण गर्छ त्यस बेलासम्म त्यो अज्ञानरूप मानिन्छ । किनभने तमोगुणको मल आवरणशक्ति रहको छ । तमोमूल शब्दले रजोमूल पनि मानिन्छ । आवरणशक्तिले स्वरूप आवृत्ति हुनासाथ रजोमूल विक्षेपशक्तिले चित्तको चञ्चलता भइहाल्छ । जबसम्म रजोगुण र तमोगुणले व्याप्त वृत्तिद्वारा आफ्नो स्वरूपको उल्टो धारणा र विषयको चिन्तन भइहाल्छ तबसम्म यो झूटो संसार साँचोझैं भएर जन्म र मृत्युको चक्र चलिरहन्छ ।

**नेति प्रमाणेन निराकृताखिलो**
**हृदा समास्वादित-चिद्घनामृत ।**
**त्यजेदशेषं जगदात्तसद्रसं**
**पीत्वा यथां भः प्रजहाति तत्फलम् ॥३४॥**

यो हैन-हैन कहने श्रुतिबाट सारा
त्यागेर चिद्-अमृतको रसपान गर्दै।
छोडोस् जगत सब चुसेर रसै मजाको
छोक्रा त छोड्छ जसरी रस ली फलैको ॥

(महावाक्य-विचारको कर्तव्य यहाँ बताइन्छ ।) पहिलो नेतिले कार्य छैन भन्ने र दोस्रो नेतिले कारण पनि छैन भन्ने वेदवाक्यको प्रमाणद्वारा सारा जगत् झूटो हो भन्ने निश्चय गरेर हटाई सत्यगुणी मनले राम्ररी चैतन्यधनरूप अमृतको स्वाद लिएर अर्थात् दुःख नमिसिएको सुखको अनुभव गरेर चैतन्यरूप रस चुसी सारा नामरूप जड जगत्लाई छोडोस् । जस्तो उखू आदि फलको रस चुसेर छोक्रा थुकिन्छ त्यसै गरी विषयाकार वृत्तिको प्रवाह चलाई आनन्दको रस लेओस् । अन्त्यमा सारा नाम र रूपमा आस्था नराखी सबै जगत् ब्रह्मरूप देखोस् ।

**कदाचिदात्मा न मृतो न जायते**
**न क्षीयते नापि विवर्धतेऽनवः ।**
**निरस्त-सर्वातिशयः सुखात्मकः**
**स्वयम्प्रभः सर्वगतोऽयमद्वयः ॥३५॥**

आत्मा न मर्छ कहिले न त जन्म लिन्छ
न क्षीण हुन्छ न त बढ्छ नयाँ त हैन ।
छैनन् विशेषण कुनै सुखरूप हो ऊ
हो स्वप्रकाश अनि व्यापक एक मात्र ॥

(वैराग्यका निम्ति जगत् अनित्य हो भन्ने देखाएर जन्मन्छ, छ, परिणामी छ, बढ्छ, घट्छ र नष्ट हुन्छ यी छ विकारले रहित भएको आत्मा नित्य सुखरूप छ भन्ने यहाँ देखाइन्छ ।) कहिल्यै पनि आत्मा

मर्दैन, जन्मँदैन, घट्दैन, बढ्दैन, नयाँ हुँदैन अर्थात् जन्मान्तर नभएकाले आत्मा नयाँ हुँदैन । यसै हुँदा यो परिणामी पनि होइन । आत्मादेखि भिन्न जड वस्तु त छ किसिमको विकारले युक्त छ । सारा अतिशय अर्थात् विशेषणले रहित छ । अर्थात् ठूलो पनि होइन, सानो पनि होइन, लामो पनि होइन, छोटो पनि होइन । अनि आत्मा अखण्ड आनन्दस्वरूप र प्रकाश अर्थात् आफैं प्रकाशस्वरूप छ । (शरीर, इन्द्रिय इत्यादि सारा जड र परप्रकाश्य अर्थात् अरूले प्रकाश गरिने र दुःखमय हुन् ।) आत्मा सर्वगत अर्थात् सर्वत्र रहनाले व्यापक छ अनि अद्वय अर्थात् दुई होइन किन्तु एक छ ।

**एवंविधे ज्ञानमये सुखात्मके**
**कथं भवो दुःखमयः प्रतीयते ।**
**अज्ञानतोऽध्यासवशात् प्रकाशते**
**ज्ञाने विलीयते विरोधतः क्षणात् ॥३६॥**

यस्तो सुखात्मक र केवल बोधबाट
संसार दुखमय यो हुन जान्छ केले ?
अज्ञानबाट भुलले न जान्छ विश्व
ज्ञानै भए तर बिलाउँछ उत्तिखेर ॥

(त्यस्तो विकारले रहित ज्ञानमय अनि आनन्दस्वरूप आत्मामा कसरी विकारी, जड र दुःखरूप जगत्को भान भन्ने शङ्काको जवाफ यो श्लोकमा दिइन्छ ।) यस्तो ज्ञान र सुखरूप आत्मामा कसरी दुःखरूप संसार पैदा भयो भन्दा जवाफ हो अज्ञानबाट । अर्थात् यथार्थ आत्मस्वरूपको ज्ञान नहुँदा त्यही अज्ञानमूलक अभ्यासबाट । अनि आफू नभएको मन, प्राण, इन्द्रिय, शरीरलाई आफू भन्न थाल्छ । (जस्तो डोरी भन्ने यथार्थ ज्ञान नहुँदा सर्पको भान हुन्छ । तर विशेष ज्ञान र अज्ञानको

विरोध भएको हुँदा ज्ञानले अर्थात् आत्मालाई यथार्थ जान्नाले छिनमा नै अज्ञान नष्ट हुन्छ । यसैले मनुष्यको पुरुषार्थ हो आत्मज्ञान गर्नु ।)

**यदन्यदन्यत्र विभाश्यते भ्रमा-**
**दध्यासमित्याहुरमु विपश्चित ।**
**असर्पभूतेऽहि विभावतं यथा**
**रज्वादिके तद्वदपीश्वरे जगत् ॥३७॥**

जो भास्छ एक चिजमा अरु भूलबाट
अध्यास हो त्यहि भनेर सिपालु भन्छन् ।
जो सर्प हैन त्यस डोरितिरै त सर्प
भानै भएसरि त ईश्वरमा जगत् हो ॥

यदि अर्को कुरा (सर्प आदि) अर्को वस्तुमा (डोरी आदिमा) भ्रमले भान हुन्छ भने यस्तोलाई विद्वान्हरू अभ्यास भन्छन् । जस्तो सर्प नभएको डोरी आदिमा सर्पको भ्रम हुन्छ । त्यस्तै ईश्वरमा पनि जगत्, शरीर आदि सारा संसारको भ्रम ईश्वरको (आफ्नो) यथार्थ स्वरूप नजान्नाले हुन्छ ।

**विकल्प-माया-रहिते चिदात्मके-**
**हङ्कार एष प्रथमः प्रकल्पितः ।**
**अध्यास एवात्मनि सर्वकारणे**
**निरामये ब्रह्मणि केवले परे ॥३८॥**

माया-विकल्प-रहितै अनि चित्स्वरूप
आत्मा निरामय छ कारण हो सबैको ।
त्यो ब्रह्म केवल त हो त्यसमा भ्रमैले
पैली अहङ्कृति खडा त भयो अकस्मात् ॥

सारा विकल्पको कारण जो माया हो त्यसले रहित भएका अनि साराका कारण, फेरि निरामय अर्थात् दुःख नमिसिएको आनन्दस्वरूप, केवल अर्थात् सारा विकारले शून्य व्यापक परब्रह्ममा पहिलो अर्थात् समष्टि अहङ्कारको भावना र अध्यास हो । (यसैलाई परमात्माको ईक्षण, सङ्कल्प, संवेदन आदि पनि भन्छन् ।) यही नै जगत्को सृष्टिको कारण हो । पछि यसैबाट व्यष्टि अहङ्कार खडा हुन्छ । यसको नाशका लागि मनुष्यले सङ्कल्प-विकल्प हटाउने अभ्यास क्रमैसँग गर्दै गयो भने यो अहङ्कारको नाश गर्न सक्दछ । (जगत् मिथ्या हो र आफू पूर्ण चैतन्यस्वरूप हो भन्ने भावना दृढ भए अहङ्कार नष्ट हुन्छ ।)

**इच्छादि-रागादि-सुखादि-धर्मिकाः**
**सदा धियः संसृति-हेतवः परे ।**
**यस्मात् प्रसुप्तौ तदभावतः परः**
**सुखस्वरूपेण विभाव्यते हि नः ॥३९॥**

इच्छाहरू सुखहरू अनि राग आदि
हुन् बुद्धि-धर्म सब संसृतिका त हेतु ।
सुत्दा त बुद्धि लय हुन्छ र एक आत्मा
आनन्दरूप प्रकटै हुन जान्छ हाम्रो ॥

(संसार बुद्धिका रहेको हो, आत्मामा छैन भन्ने विवेक अन्वय र व्यतिरेक नियमद्वारा यहाँ देखाइन्छ ।) परमात्मामा कल्पित हुन गएको यो संसारको कारण हो इच्छा, उपेक्षा, राग, द्वेष, सुख, दुःख आदि द्वन्द्वले युक्त बुद्धि नै । त्यसैसँग मिलेर जीव सुखी-दुःखी बनिरहन्छ । (आत्मामा पहिले बुद्धिको अध्यास हो संसर्गाध्यास । 'अहम्' मा 'इदम्' हो स्वरूपाध्यास । 'अहम्' को 'इदम्' सँग सम्बन्ध हो संसर्गाध्यास । अहम्मा अर्थात् आत्मामा इदम् अर्थात् जगत् तीनै कालमा छैन । जस्तो

डोरीमा सर्पको भान हो स्वरूपाध्यास । डोरीको मोटाइ र लम्बाइ हो संसर्गाध्यास । बुद्धि रहुन्जेल संसार रहिरहन्छ भन्दा अन्वय निमय हुन जान्छ । पछि बुद्धि नभए संसार रहँदैन भन्ने व्यतिरेक नियम अब देखाइन्छ ।) सुतेको अवस्थामा बुद्धिको वृत्ति नहुनाले हामीलाई खालि सुखस्वरूपको भान हुन्छ । (त्यो बेलामा त्यो सुख भन्न नसके पनि ब्युँझेपछि आनन्दसँग सुतें भन्ने स्मृति हामीलाई हुन्छ । इच्छा आदि नै संसारको बन्धन हो भन्ने यहाँ बताइयो । यसै हुँदा विवेकद्वारा इच्छा आदि छोड्नु नै मुक्तिको उपाय हो ।)

**अनाद्य-विद्योद्‌भव-बुद्धि-विम्बितो**
**जीवः प्रकाशोऽयमितीर्यते चितः ।**
**आत्मा धियः साक्षितया पृथक्स्थितो**
**बुद्‌ध्या परिच्छिन्न-परः स एव हि ॥४०॥**

अज्ञानले प्रकटितै मतिमा परेको
चैतन्यको त प्रतिबिम्ब कहिन्छ जीव ।
आत्मा पृथक् छ मतिको त भएर साक्षी
त्यो बुद्धि सीमित हुँदैन परै हुनाले ॥

अनादि जो अविद्या हो त्यसबाट पैदा भएको बुद्धिमा प्रतिविम्ब परेको चैतन्यको प्रकाश नै जीव भनिन्छ । आत्मा चाहिँ बुद्धिको साक्षी रूपले अलग रहेको छ । बुद्धि परिच्छिन्न जस्तो देखिए पनि आत्मामा बुद्धिका धर्महरूको सङ्ग छैन । अन्तर्यामी रूपले ऊ सर्वत्र रहेको छ । जस्तो घटाकाश घटरूपी उपाधिभित्र रहे पनि घटको धर्मले छोइएको हुँदैन । यसो हुँदा आत्मा बुद्धिको परिच्छेददेखि रहित छ । बुद्धिदेखि उत्कृष्ट छ । तर त्यो जीव परमात्मा नै हो । (जस्तो ऐनामा देखिएको मुखको प्रतिविम्ब आफ्नो घाँटीमाथिको विम्बरूप नै हो । त्यस्तै ज्ञानद्वारा

प्रतिविम्बको आधार अविद्या र अन्तस्करण हटेपछि जीव पनि परमात्मा भइहाल्छ ।)

**चिद्-विम्ब-साक्ष्यात्म-धियां प्रसङ्गतस्**
**त्वेकत्र वासादनला-क्त-लोहवत् ।**
**अन्योन्यमध्यास-वशात् प्रतीयते**
**जडाजडत्वं तु चिदात्म-चेतसोः ॥४१॥**

त्यो जीव साक्षि अनि बुद्धि-प्रसङ्गबाट
एकत्र वास भइ तप्त फलाम जस्तै ।
अध्यास आपस हुँदा जडझैं छ आत्मा
देखिन्छ फेरि अजडैसरि बुद्धि चाहिँ ॥

(अब बुद्धि र आत्माको परस्परको अध्यासले परस्परको धर्मको भान हुन्छ भन्ने दृढटाका लागि चित् र जडको मिलन देखाइन्छ ।) चित् नै हो विम्ब जसको भन्ने समास गर्दा चिद्विम्बको अर्थ चैतन्यको प्रतिविम्ब हो भन्ने हुन जान्छ । त्यो प्रतिविम्ब जीव, साक्षी आत्मा र बुद्धि एकै ठाउँमा रहेका हुनाले परस्परको अध्यास हुन जाँदा बुद्धि चेतनजस्तो र आत्मा जडजस्तो भान हुन्छ । यहाँ कसैले चित्, विम्ब, साक्षी आत्मा भनेर चैतन्यरूप आत्मालाई मात्र लिई आत्मा र बुद्धिको प्रसङ्ग भनेका छन् । कसैले चाहिँ साक्षात्मधियाँ पाठ लेखी साक्ष्यको अर्थ इन्द्रियसहित भन्ने पनि लेखेका छन् । जस्तो आगोमा तताएको फलामको डल्लो रातो र तातो देखिन्छ । रातो र तातो हुनु आगोको धर्म हो । त्यो कुरा फलाममा आरोप गरिन्छ । अनि डल्लो आकार फलामको धर्म हो । त्यो चाहिँ आगोमा आरोप गरिन्छ ।

यसरी नै जड बुद्धि पनि चेतनजस्तो र चैतन्यरूप आत्मा चाहिँ जडजस्तो अज्ञानीलाई भान हुन्छ अनि अनात्म बुद्धिहरूका साथ तद्रूप

भएर म कर्ता हुँ, म भोक्ता हुँ भन्ने यस्तो मोह हुन्छ । बुद्धिको नजिकै रहेकाले अकर्ता आत्मामा कर्तृत्वभाव पैदा हुन्छ । यहाँ जड बुद्धि र चैतन्यरूप आत्माको मिलन छ । यसै गरी म सुखी हुँ, म दुःखी हुँ इत्यादि चित् र जडको मिलनकै फल हो । अझ यस्तो अहम्ताले नपुगी मेरो छोरो, मेरो धन इत्यादि ममतासमेत बढाउँछ र जीव संसारचक्रमा घुमिरहन्छ । यस्तो परस्परको अध्यासलाई अन्योन्याध्यास भन्छन् । भगवान् शङ्कराचार्य भन्नुहुन्छ– "आत्माको सत् र चित् अंश अनि बुद्धिको वृत्ति यी दुई मिलेपछि जान्दछु भन्ने भावना हुन्छ ।" आत्माको विकार कहिल्यै हुँदैन । बुद्धिमा चैतन्य कहिल्यै पनि छैन । तैपनि जीव म कर्ता, म द्रष्टा भनी मुग्ध हुन्छ । यसबाट उद्धारका लागि हामीलाई विवेक र विचारको आवश्यकता पर्दछ । बुद्धि कति हो, जीव के हो ? आत्मा कति हो ? इत्यादि केलाएर जड अंशलाई छोडी चैतन्य मात्र भएर रहने दृढ अभ्यास गर्नुपर्छ ।

**गुरोः सकाशादपि वेदवाक्यतः**
**सञ्जात-विद्यानुभवो निरीक्ष्यतम् ।**
**स्वात्मानमात्मस्थमुपाधिवर्जितं**
**त्यजेदशेष जडमात्मगोचरम् ॥४२॥**

आचार्यबाट र बुझेर त वेदवाक्य
सद्ज्ञानको अनुभवै गरि चित्त-संस्थ ।
आत्मा त हेरि विधिसाथ उपाधिहीन
छोडोस् सबै बिलकुलै जड दृश्य आफ्ना ॥

(शरणमा परेपछि ज्ञानी गुरुले उपदेश दिनुहुन्छ, तिमी स्थूल शरीर, सूक्ष्म शरीर र कारण शरीर होइनौ किनकि यी तीनोटै जड हुन् । जाग्रत् आदि अवस्था तिम्रा होइनन्, तिमी बुद्धिवृत्तिका प्रकाशक

हौ, कहिल्यै नाश नहुने सनातन शुद्ध चैतन्य वस्तु तिमी हौ ।) युरी तत्त्वमसि आदि महावाक्यको श्रवण गरी मनन र निदिध्यासनद्वारा ज्ञानरूप आत्माको अनुभव गर्दै आफ्नै हृदयमा रहेका उपाधिले रहित आत्माको साक्षात्कार गरेर सारा जड दृश्यलाई छोडोस् । अनि निरतिशय आनन्दको अनुभव हुन जान्छ । गुरुविना अनि ईश्वरको अनुग्रहविना ज्ञान हुँदैन । शिष्यको पुरुषार्थ त आवश्यक छँदै छ ।

**प्रकाशरूपोऽहमजोऽहमद्वयो-**
**ऽसकृद्विभातोऽहमतीव निर्मलः ।**
**विशुद्ध-विज्ञान-घनो निरामयः**
**सम्पूर्ण आनन्दमयोऽहमक्रियः ॥४३॥**

अद्वैत जन्मरहितै म प्रकाशरूप
अत्यन्त निर्मल निरन्तर भासमान ।
सम्पूर्ण बोधघन हुँ म उपाधिहीन
आनन्दरूप अनि कर्म कुनै नगर्ने ॥

(जान्न लायक आत्माको स्वरूप अब दुई श्लोकले बनाइन्छ ।) म प्रकाशरूप हुँ अर्थात् विषयजस्तै चित्तवृत्तिको सहायताले अरूले प्रकाश गरिने होइन किन्तु स्वयम्प्रकाश हुँ अनि अध्यस्त सङ्कल्प-विकल्प आदिको प्रकाशक हुँ । अजः अर्थात् जन्म आदिले रहित हुँ । अद्वय अर्थात् दोस्रो सजातीय नभएको छु । असकृत् विभातः अर्थात् सधैं आफैं प्रकाशमान् छु । (सूर्य र चन्द्रमाहरूको पनि आत्मामा गम पुग्दैन, बरु सूर्य-चन्द्रहरू आत्माले प्रकाशित छन् ।) म ज्यादै निर्मल छु अर्थात् मायाले गराएको आवरण र विक्षेप ममा छैन । विशुद्ध चैतन्य अनुभवस्वरूप म हुँ । निरामय अर्थात् कर्तृत्व आदि अभिमानले रहित म छु । सम्पूर्ण अर्थात् देश, काल आदिको परिच्छेदन ममा छैन । म आनन्दरूप हुँ । म शुद्ध

चैतन्यमा कुनै क्रिया छैन । म संसारी जीव होइन ।

**सदैव मुक्तोऽहमचिन्त्य शक्तिमा-**
**नतीनिद्रय-ज्ञानमविक्रियात्मकः ।**
**अनन्तपारोऽहमहर्निशं बुधै-**
**र्विभावितोऽहं हृदि वेदवादिभिः ॥४४॥**

मुक्तै सधैं हुँ म अचिन्तित शक्तियुक्त
त्यागने विकार अनि इन्द्रियको अतीत ।
पारै अनन्त श्रुतिमा निपुणैहरूले
रातोदिनै हृदयमा खुद भावितै हुँ ॥

म सधैं अर्थात् भूत, वर्तमान र भविष्यत् यी तीनै कालमा मुक्त छु । मेरो शक्ति यत्ति भनेर चिन्तन गर्न सकिँदैन । इन्द्रियको विषय नभएको ज्ञानस्वरूप म हुँ । ममा कुनै विकार छैन अर्थात् म परिणामी होइन । अन्त र पार नभएको छु अर्थात् देश र कालको परिच्छेददेखि रहित छु । वेदको मर्म बुझेका पण्डितहरूले हृदयमा रातदिन भावना गरिन्छु ।

**एवं सदात्मानमखण्डितात्मना**
**विचारमाणस्य विशुद्ध-भावना ।**
**हन्यादविद्यामचिरेण कारकै**
**रसायनं यद्वदुपासितं रुजः ॥४५॥**

यस्तो निरन्तर अखण्डित वृत्तिले नै
गर्दा विचार हुन जान्छ विशुद्ध भाव ।
त्यल्ले त नास्दछ सकार्य छिटो अविद्या
खाँदा रसादि जसरी सब रोग नास्छ ॥

(भावनाको फल यहाँ बताइन्छ ।) यसरी अर्थात् माथिका दुई श्लोकमा बताएअनुसार सधैं अखण्डित रूपले अर्थात् बीच-बीचमा विषयको चिन्तन गर्ने जीवभावले खण्डित नभई तेलको धाराजस्तै अटुट विचार गर्ने मुमुक्षुको हृदयमा ज्यादै शुद्ध भावना अर्थात् म ब्रह्म हुँ भन्ने भावनाको दृढ संस्कार ब्रह्माकार वृत्ति हुन जान्छ र कारक अर्थात् जन्मान्तर गराउने कर्महरूका साथ अविद्या अर्थात् अज्ञानलाई छिटै नासिदिन्छ । जस्तो रसादि ओखतीको सेवन गर्नाले रोग नष्ट हुन्छ ।

**विविक्त आसीन उपारतेन्द्रियो**
**विनिर्जितात्मा विमलान्तराशयः ।**
**विभावयेदेकमनन्य-साधनो**
**विज्ञान-दृक् केवल आत्मसंस्थितः ॥४६॥**

एकान्तमा रहनु इन्द्रियलाई रोकी
चित्तै जिती विमल आशय नै तुल्याई ।
छोडेर साधन अरू लिइ ज्ञान-दृष्टि
होस् आत्मसंस्थित र केवल एक होओस् ॥

(ध्यान गर्ने तरिका दर्साउँदै सविकल्प समाधि यहाँ बताइन्छ ।) कोही पनि मानिस नभएको एकान्तमा पद्मासन, सुखासन आदि आसनमा बसेर, इन्द्रियहरूलाई विषयबाट हटाई अर्थात् शम, दम आदि साधन लिएर प्राणायाम आदिद्वारा मनलाई जितोस् । एकाग्र भई अन्तस्करण शुद्ध गराओस्, आत्माकारको प्रवाह चलाइरहोस् । अनन्य साधन हो अर्थात् तत्त्वज्ञानदेखि भिन्न अरू साधनलाई छोडी केवल अर्थात् असङ्ग भएर एक आत्माको ध्यान गरोस् अर्थात् केवल आत्मामा स्थित होस् । अर्थात् सविकल्प समाधिमा रही चित्त ब्रह्माकार तुल्याई विशिष्ट ज्ञानको अनुभव गरिरहोस् । (सामान्य ज्ञानले अज्ञानको नाश गर्न

सक्दैन । जस्तो सामान्य सूर्यको तेजबाट आगो निस्कँदैन, किन्तु सूर्यकान्त आदिमा परेको विशेष तेजबाट आगो निस्कन्छ त्यस्तै ब्रह्माकार वृत्तिमा प्रतिफलित ज्ञानले अज्ञानको नाश गरिन्छ । सामान्य ज्ञानले त अझ अज्ञानलाई सिद्ध गरिरहन्छ ।) सविकल्प समाधिको विषयको सर्ववेदान्तसिद्धान्तसारसङ्ग्रह ८२० मा भगवान् शङ्कराचार्य भन्नुहुन्छ– "ज्ञाता आदिको त्रिपुटीको विलय नभए पनि ज्ञेय ब्रह्ममा तदाकार भएर चित्तवृत्तिको स्थिति हो सविकल्प समाधि । जस्तो माटाको हात्तीमा माटोमात्रको भान भए पनि हात्तीको भान हुन्छ ।"

**विश्व यदेतत् परमात्मदर्शनं**
**विलापयेदात्मति सर्वकारणे ।**
**पूर्णश्चिदानन्दमयोऽवतिष्ठते**
**न वेद बाह्यं न च किञ्चिदान्तरम् ॥४७॥**

जो यो जगत् छ सब त्यो परमात्मरूप
भन्ने बुझी सकल कारणमा बिलाओस् ।
आनन्द चिन्मय र जो परिपूर्ण हुन्छ
जान्दैन बाहिर कुनै अनि भित्र केही ॥

परमात्मा नै प्रकाशक भएको या सारा विश्वलाई उसकै मुहान अर्थात् साराको कारण भएको आत्मामा लय गराइदेओस् । (जस्तो घैंटो, गाग्रो, घ्याम्पो आदि सारा माटाका भाँडाहरू माटो मात्र हुन् भन्ने बुझेपछि उपादान कारण भएको माटामा विलीन हुन्छन् त्यसै गरी सारा कार्य र कारणरूप प्रपञ्चलाई आत्मामा विलीन गराइदेओस् ।) अनि मुमुक्षु त पूर्ण अर्थात् देश, काल आदिदेखि रहित भएर चैतन्य र आनन्दरूप भई निर्विकल्प समाधिमा रहनुहुन्छ । ज्ञाता, ज्ञान, ज्ञेय आदि त्रिपुटीले रहित भएर ब्रह्म मात्र भएकाले बाहिरको शब्द, स्पर्श आदि

उहाँ थाहा पाउनुहुन्न । (सर्ववेदान्तसिद्धान्तसारसङ्ग्रहमा भगवान् शङ्कराचार्य भन्नुहुन्छ– ज्ञाता आदि त्रिपुटीले रहित भएर ज्ञेयमात्रमा मनको दृढ स्थिति हो निर्विकल्प समाधि अर्थात् मन ब्रह्मरूप हुन्छ । जस्तो पानीमा हालेको नुन बिलाउँछ र पानी मात्र हुन्छ ।)

**पूर्व समाधेरखिलं विचिन्तये-**
**दोङ्कारमात्रं सचराचरं जगत् ।**
**तदेव वाच्यं प्रणवो हि वाचको**
**विभाव्यतेऽज्ञानवशान्न बोधतः ॥४८॥**

गर्नू विचार त अगाडि, समाधिभन्दा
ठानोस् चराचर जगत् प्रणवस्वरूप ।
त्यो वाच्य हो प्रणववाचक हो परन्तु
अज्ञानबाट छ, रहन्न भए त बोध ॥

(सविकल्प समाधि हुनुभन्दा अघि गर्नुपर्ने कर्तव्य यहाँ बताइन्छ ।) सविकल्प समाधि हुनुभन्दा अघि चर र अचर सारा जगत् प्रणवमा अन्तर्भूत अथात् रहेको छ भन्ने ठानोस् । त्यो जगत् नै प्रणवको वाच्य अर्थ हो । प्रणव चाहिँ वाचक अर्थात् बताउने हो । तर यो वाच्य र वाचक भावको भेद अज्ञानबाट भएको हो । बोध अथात् आत्मब्रह्मको भएपछि यो वाच्य-वाचक भाव रहँदैन । हुन त 'तस्य वाचकः प्रणवः' भनेको हुँदा यो प्रणव परमात्माको पनि वाचक हो । तर परमात्मामा कल्पित जगत् पनि परमात्मादेखि भिन्न होइन । जस्तो डोरीमा देखिएको सर्प डोरीदेखि भिन्न होइन । प्रश्नोपनिषद्को पञ्चम प्रश्नमा भनिएको छ 'हे सत्यकाम् पर र अपर ब्रह्म प्रणव हो' फेरि 'जसलाई इच्छा गरेर ब्रह्मचर्य गर्छन् त्यो पद सङ्क्षेपमा प्रणव हो' इत्यादि वचनद्वारा परब्रह्मको वाचकरूपले र प्रतिमाजस्तै प्रतीकरूपले पनि उपनिषद्हरूमा

विभिन्न उपासना बताइएको छ। परमात्माको साक्षात्कार भएपछि अरू कुनै किसिमको भावना सम्भव हुँदैन, केवल ब्रह्मरूपको मात्र भान हुन्छ।

**अकारसंज्ञः पुरुषो हि विश्वयो**
**ह्युकारकस्तैजस ईर्यते क्रमात्।**
**प्राज्ञो मकारः परिपठ्यतेऽखिलैः**
**समाधिपूर्वं न तु तत्त्वतो भवेत् ॥४९॥**

जाग्रत्-स्थ विश्व तर अर्थ अकारको हो
स्वप्नस्थ तेजस उकार हुने क्रमैले।
हो प्राज्ञ सुप्त पुरुषै कहिले मकार
यो हो समाधि अघि किन्तु यथार्थ हैन ॥

(प्रणवका आकार, उकार र मकारको अर्थ यहाँ देखाइन्छ।) अविद्या, अन्तस्करण र स्थूल शरीरले युक्त जाग्रत् अवस्थाको अभिमानी विश्वलाई अकारले बताउँछ। अविद्या र अन्तस्करण यी दुई उपाधिले युक्त स्वप्नको अभिमानी तेजसलाई उकारले कहन्छ। अविद्या र अन्तस्करणको संस्कारले युक्त सुषुप्तिको अभिमानी प्राज्ञलाई मकारले बताउँछ भनी सारा वेदहरू भन्छन्। (व्यष्टि विश्व, तैजस र प्राज्ञ मात्र होइन) किन्तु समष्टि विराट्, हिरण्यगर्भ र ईश्वर पनि कसैले अकार, उकार र मकारका वाच्य हुन्। तर यो भावना सविकल्प समाधि हुनुभन्दा अगाडिको हो। तत्त्वको साक्षात्कार भएपछि केवल ब्रह्म मात्र रहनाले यस्तो भावना हुँदैन।

**विश्वं त्वकारं पुरुषं विलापये-**
**दुकारमध्ये बहुधा व्यवस्थितम्।**
**ततो मकारे प्रविलाप्य तैजसं**
**द्वितीय-वर्णं प्रणवस्य चान्तिमे ॥५०॥**

बन्ने अनेक थरि विश्व अकारलाई
पारोस् बिलापन उकार त तैजसमा ।
वर्ण द्वितीय त्यसलाई पुनः पछिल्लो
मात्रा छ जो प्रणवको त्यसमै बिलाओस् ॥

अब विलापनको प्रकार बताइन्छ । स्थूल देहको अभिमान आदि विभिन्न रूपले रहेको जाग्रतेको अभिमानी विश्व पुरुष आकारलाई उकार अर्थात् स्वप्नको अभिमानी तैजसमा विलय गराओस् अर्थात् विलीन छ भन्ने भावना गरोस् । त्यसपछि स्वप्नको सूक्ष्म देहको अभिमानी तैजस उकारलाई प्रणवको अन्तिम वर्ण मकारमा अर्थात् सुषुप्तिको अभिमानी प्राज्ञमा विलीन छ भन्ने भावना गरोस् । कार्य कारणमा बिलाउँछ भन्ने नियम छ । जस्तो कार्य घट कारण माटामा बिलाउँछ । कार्य गहना सुनमा बिलाउँछ । त्यस्तै कार्य विश्व कारण तैजसमा बिलाउँछ किनभने स्थूल शरीरको कारण सूक्ष्म शरीर हो । त्यस्तै कार्य तैजस कारण प्राज्ञमा बिलाउँछ किनभने कारण शरीर अज्ञात नभए सूक्ष्म शरीर पैदा हुँदैनथ्यो ।

**मकारमप्यात्मनि चिद्घने परे**
**विलापयेत् प्रज्ञामपीह कारणम् ।**
**सोहं परं ब्रह्म सदा विमुक्तिमद्**
**विज्ञान-दृङ् मुक्त उपाधितोऽमल ॥५१॥**

प्राज्ञै मकारमय कारणलाई फेरि
आत्मस्वरूप पर चिद्घनमा बिलाओस् ।
हूँ ब्रह्म त्यै परम खास सधैं विमुक्त
विज्ञान-दृक् अनि उपाधि-वियुक्त शुद्ध ॥

कारण सुषुप्तिको अभिमानी प्राज्ञ मकारलाई पनि चैतन्यघन परमात्मामा विलीन छ भन्ने भावना गरोस् किनभने आत्मचैतन्यमा प्राज्ञ अध्यस्त हो । अध्यस्त वस्तु अधिष्ठानदेखि भिन्न हुँदैन र म त्यही सधैं मुक्त भइराखेको विशिष्ट ज्ञानरूप हुँ, सारा उपाधिदेखि रहित हुनाले सधैं निर्मल छु भनी सधैं सजातीय आत्माकार वृत्तिको प्रवाह चलाइरहोस् । अन्तमा सविकल्पको पनि परिपाक भएपछि त्रिपुटीको विलय हुन्छ र परिशिष्ट निर्विकल्प शुद्ध चैतन्य मात्रको अनुभव भइहाल्छ । यो लययोगको प्रक्रिया हो । कार्यलाई कारणमा विलीन गराउँदै जाँदा कार्य र कारणको अभेद बुझ्दै सारा ब्रह्म मात्र हुन्छ । यदि कुनै कपडाको कारण खोल्दै गयौं भने ब्रह्ममा पुगिहालिन्छ । जस्तो कपडाको कारण हो धागो । धागाको कारण हो कपास । कपासको कारण हो पृथिवी । पृथिवीको कारण हो जल । जलको कारण हो तेज । तेजको कारण हो वायु । वायुको कारण हो आकाश । आकाशको कारण हो तन्मात्रा । तन्मात्राको कारण हो महत्तत्त्व । त्यसको कारण हो प्रकृति । प्रकृतिको पनि कारण हो परमात्मा । कार्य र कारणको अभेद मान्ने नियम भएकाले सारा हो परमात्मा । यहाँ पचास र एकाउन्न यी दुई श्लोकमा प्रणवको अहङ्ग्रह उपासना बताइएको छ । ब्रह्मस्वरूप प्रणव नै 'म हुँ' भन्ने यस्तो भावनालाई निर्गुण प्रणवको उपासना भन्छन् । यस किसिमका प्रणका विभिन्न उपासनाहरू उपनिषद्हरूमा पाइन्छन् ।

**एवं सदा जात-परा-त्म-भावनः**
**स्वानन्द-तुष्टः परिविस्मृताखिलः ।**
**आसते स नित्यात्म-सुखप्रकाशकः**
**साक्षाद् विमुक्तोऽचल-वारि-सिन्धुवत् ॥५२॥**

यस्तो परात्म सुविचार गरी सधैं नै
स्वानन्दमा खुस भई सब बिर्सिएर ।
त्यो नित्य आत्मसुखको अनुभूति गर्दै
मुक्तै भइन्छ अति शान्त समुद्र जस्तै ॥

(यस्तो भावना गर्नको फलस्वरूप जीवन्मुक्त स्थिति यहाँ बताइन्छ ।) यसरी अघिल्लो श्लोकमा बताएमुताबिक विश्व, तैजस र प्राज्ञको विलय भएपछि सधैं परमात्माको भावनाको फलस्वरूप उहाँ आफ्नै स्वरूपको आनन्दले तुष्ट हुनुहुन्छ । शरीर, छोरा, स्वास्नी, घर, जमिन इत्यादि सारा प्रपञ्च बिर्सनुहुन्छ । औपाधिक नाम, रूप इत्यादिको भेद छोडेको हुँदा नित्य आत्मसुखस्वरूप हुनुहुन्छ । जिउँदै साक्षात् मुक्त हुनुहुन्छ । जस्तो अचल पानी भएको समुद्र छाल आदिले रहित हुन्छ त्यस्तै जीवन्मुक्त पुरुष आफ्नो अखण्ड स्वरूपमा रहनुहुन्छ ।

**एवं सदाऽभ्यस्त-समाधि-योगिनो**
**निवृत्त-सर्वेन्द्रिय-गोचरस्य हि ।**
**विनिर्जिता-शेषरिपोरहं सदा**
**दृश्यो भवेयं जित-षड्-गुणात्मनः ॥५३॥**

यस्तै निरन्तर गरेर समाधियोग
सम्पूर्ण ती विषय इन्द्रियका हटेका ।
कामादि ती सकल शत्रुहरू जितेका
तृष्णादिहीन जनको म त दृश्य हुन्छु ॥

(यस्तो समाधियोगको अध्यात्म गर्नाले सधैं राम परमात्माको दर्शन आत्मरूपमा पाइरहनुहुन्छ भन्ने यहाँ बताइन्छ ।) यसरी सधैं समाधियोगको अभ्यास गर्ने अनि सारा इन्द्रियका शब्द, स्पर्श, रूप, रस,

गन्ध आदि विषय हटेका; काम, क्रोध, लोभ, मोह आदि सारा शत्रु जितेका; भोक, प्यास, शोक, मोह, बुढ्याइँ र मृत्यु यी छ कुरा जितेका वा सर्वज्ञत्व, नित्यत्व, वित्यतृप्तत्व, बोधरूपत्व, स्वतन्त्रत्व, अलुप्तत्व यी छ गुण भएका योगीले म परमात्मालाई सधैं आत्मरूपमा देखिरहन्छन्। (वास्तवमा ज्ञानीका दृष्टिमा ब्रह्मसिवाय अरू कुनै वस्तु बाँकी रहँदैन ।)

**ध्यात्वैवमात्मानमहर्निशं मुनि-**
**स्तिष्ठेत्सदा मुक्त-समस्त बन्धनः ।**
**प्रारब्धमश्नन्नभिमानवर्जितो-**
**मय्येव साक्षात् प्रविलीयते ततः ॥५४॥**

ध्यानै गरेर यसरी दिनरात आत्मा
योगी रहोस् सकल बन्धन नित्य छोडी ।
प्रारब्धभोग त गरी अभिमान छोडी
साक्षात् ममा पछि अवश्य हुनेछ लीन ॥

यसरी रातदिन ध्यान गरेर रहने मुनिले छोरा, स्वास्नी, धन, कीर्ति इत्यादिको एषणा त्यागी सारा बन्धन चुँडालेर अभिमान छोडी प्रारब्धको भोग गरोस् । (जीवन्मुक्तका सञ्चित अर्थात् पहिले जम्मा गरिएका आगामी अर्थात् ज्ञान भएपछि गरिएका सारा कर्महरू नष्ट हुन्छन् । शरीरले केवल प्रारब्ध भोग्दछन् ।) त्यसपछि साक्षात् निर्गुण परमात्मामै विलीन हुन्छन् । अर्थात् विदेहमुक्त भई ब्रह्मरूपं नै हुन्छन् ।

**आदौ च मध्ये च तथैव चान्ततो**
**भवं विदित्वा भय-शोक-कारणम् ।**
**हित्वा समस्तं विधिवाद चोदितं**
**भजेत् स्वमात्मानमथाखलात्मनाम् ॥५५॥**

पैले पछाडि र त्यसै गरि बीचमा नै
संसार शोक-भय-कारण हो भनेर।
छोडेर वेद-विहितै सब कर्म आफ्नो
आत्मा भजोस् जुन त हो परमात्मरूप ॥

भव अर्थात् संरा सुरुमा, बीचमा र अन्त्यमा पनि डर र शोकहरूको कारण छ (अर्थात् धन कमाउँदा दुःख नै हुन्छ, फेरि त्यो धनको रक्षाका लागि चोर इत्यादिबाट डर भइहाल्छ। यदि धन नष्ट भइहाल्यो भने त झन् ठूलो शोक हुन्छ। यसै हुँदा हरेक विषयबाट सधैं डर र शोक भइरहन्छ।) भन्ने बुझेर त्यसको कारण भएको, वेदले बताएको भए पनि सारा काम्य कर्मलाई छोडेर सारा प्राणीहरूका आत्मस्वरूप भएका परमात्माको भजन गरोस्। (आफू शुद्ध चैतन्यरूप व्यापक परमात्मस्वरूप हो भन्ने बुझोस्।)

**आत्मन्यभेदेन विभावयन्निदं**
**भवत्य भेदेन मयात्मना तदा।**
**यथा जलं वारिनिधौ यथा पयः**
**क्षीरे वियद् व्योम्यनिले यथा निलः ॥५६॥**

आत्मासँगै सब प्रपञ्च अभिन्न ठान्दै
पूर्णात्मरूप मसँगै पनि भेद छुट्छ।
जस्तो नदी जलधिमा दुध दूध साथ
आका मिल्छ नभमा त मरुत् मरुत्मा ॥

(परमात्मासँग अभेदको भावनाले नाम, रूप हराउँछ र परमात्मरूप नै हुन्छ भन्ने कुरा दृष्टान्तका साथ यहाँ बताइन्छ।) यो सारा जगत्लाई आफ्नो स्वरूपमा र अधिष्ठान भएको परमात्मासँग आफ्नो अभेद जब

मुमुक्षु देख्दछ तब परमात्मासँग अभिन्न हुन्छ । जस्तो समुद्रमा पुगेका नदीहरूको जल समुद्र नै हुन्छ, दूधमा दूध अभिन्न हुन्छ, घटाकाश महाकाशमा मिल्छ, फेरि खलाँतीको वायु महावायुमा अभिन्न हुन्छ । त्यस्तै यो सारा जगत् परमात्मस्वरूप नै भान हुन्छ । अर्थात् ब्रह्मदेखिन् अरू केही पनि ब्रह्म-साक्षात्कार भएका ज्ञानी देख्न हुन्न ।

**इत्थं यदीक्षेत हि लोकसंस्थितो**
**जगन् मृषैवेति विभावयन् मुनिः ।**
**निराकृतत्वाच्छ्रुति-युक्ति-मानतो**
**यथेन्दुभेदो दिशि दिग्भ्रमादयः ॥५७॥**

यस्तो विचार त गरेर जगत् झुटो हो
भन्ने निधो मुनि गरोस् रहँदा जगत्मा ।
हो यो प्रमाणहरूबाट हटाइएको
जस्तो त भास्छ दुइ चन्द्र र दिग्-भ्रमादि ॥

(यसरी ब्रह्मको साक्षात्कार गरेका ज्ञानीको 'जगत् साँचो हो' भन्ने भ्रम स्वतः जान्छ भन्ने श्लोकमा बताइन्छ ।) संसारमा रहेर प्रारब्धवशले लोकव्यवहार गरे पनि जगत् झूटो हो भन्ने दृढ निश्चय गर्दै यसरी ब्रह्मको साक्षात्कार हुन्छ, तब जगत्को भ्रम स्वतः हट्छ । किनभने परमात्माभन्दा भिन्न वस्तु झूटो हो, सारा जगत् ब्रह्म हो, सारा जगत् ब्रह्म हो इत्यादि श्रुतिले जगत्को निराकरण गरिराखेको छ । फेरि जाग्रत्, स्वप्न र सुषुप्ति यी तीनै अवस्थामा तथा भूत, वर्तमान र भविष्यत् यी तीनै कालमा रहिरहने मात्र साँचो हो, अनि शरीरको नाश अवश्य हुन्छ इत्यादि युक्तिले पनि आत्मादेखि भिन्न वस्तु झूटो ठहरिन्छ । 'जगत् झूटो हो, दृश्य हुनाले घरजस्तै, अनि ज्ञानले हटाइने हुँदा पनि झूटो हो, सिपीमा देखिएको चाँदीजस्तै' भन्ने अनुमान प्रमाणले

पनि जगत् झूटो ठहरिन्छ । जस्तो एउटै चन्द्रमा हुँदा पनि आँखाको दोषले दुई चन्द्रमा देख्छ । जस्तो घना जङ्गल आदिमा दिशाको भ्रम हुन्छ । कुन पूर्व हो, कुन पश्चिम हो भन्ने छुट्टयाउन मुस्किल पर्छ, अझ पूर्वलाई पश्चिम भन्ठानिन्छ । फेरि आफू नाउ आदिमा चढेको छ भने अलि परका रूखहरू र आफू घुमिरहेको मानिसलाई दिशा हिँडेजस्तो भान हुन्छ, तर नाउ हिँडेको हो, रूख हिँडेको होइन इत्यादि ज्ञानले भ्रम नष्ट हुन्छ । त्यस्तै ब्रह्मको यथार्थ अनुभवले जगत्‌को भ्रम नष्ट हुन्छ ।

**यावन्न पश्येदखिलं मदात्मकं**
**तावन् मदाराधन-तत्परो भवेत् ।**
**श्रद्धालुरत्यूर्जित-भक्ति-लक्षणो**
**यस्तस्य दृश्योऽहमहर्निशं हृदि ॥५८॥**

देख्दैन विश्व जबसम्म स्वरूप मेरो
मद-भक्तितर्फ तबसम्म त तत्परै होस् ।
श्रद्धालु फेरि दृढ भक्ति हुने जनैको
रातोदिनै हृदयमा म त देखिइन्छु ॥

(यस्तो निर्गुण ज्ञानको अनुभव गर्न पहिले चित्तको एकाग्रताको आवश्यकता भएकाले त्यसका लागि सगुण स्वरूपको सम्म निर्गुणस्वरूपमा नै अधिष्ठान भएको विवर्तरूप जगत् परमात्मस्वरूप नै हो भन्ने दृढ निश्चय हुँदैन, तबसम्म सगुणस्वरूपको आराधनामा तत्पर होस् । जो श्रद्धालु छ अर्थात् सगुणस्वरूपको आराधनाले नै निर्गुण ज्ञानमा पुऱ्याउँछ भन्ने दृढ विश्वास गर्छ र अत्यन्त नै सजातीय प्रवाहरूपमा बहिरहेको उत्कट भक्ति छ भने त्यसको हृदयमा रातदिन म देखा परिरहन्छ ।

**रहस्यमेतच्छ्रुतिसारसङ्ग्रहं**
**मया विनिश्चित्य तवोदितं प्रियं ।**
**यस् त्वेत् दालोचयतीह बुद्धिमान्**
**समुच्यते पातक राशिभिः क्षणात् ॥५९॥**

यस्तो रहस्यमय सङ्ग्रह वेदसार
हे भाइ निश्चय गरी अहिले बताएँ ।
जो बुद्धिमान् त यसलाई विचार गर्ला
छुट्ला तुरुन्त उ त पातक राशिबाट ॥

हे प्रिय लक्ष्मण, अत्यन्त गोप्य भएको यो वेदको सारसङ्ग्रह निश्चय गरेर मैले तिमीलाई बताएँ । (अर्थात् वेदको सार भएकाले यसमा शङ्का गर्ने ठाउँ छैन ।) जुन बुद्धिमान्ले यसको मनन गर्छ, यसैको विचारमा मग्न भइरहन्छ भने त्यो एकैछिनमा पापको राशबाट मुक्त हुन्छ ।

**भ्रातर्यदीदं परिदृश्यते जगन्**
**मायैव सर्व परिहृत्य चेतसा ।**
**मद्भावना भावित शुद्ध मानसः**
**सुखौ भवानन्दमयी निरामयः ॥६०॥**

हे भाइ जेजति जगत् यदि देखिन्छ
झूटो त त्यो तब भनी मनले हटाई ।
मेरो त भावना गरी भइ शुद्ध चित्त
आनन्दरूप र निरामय फेरि होऊ ॥

लक्ष्मणलाई दृढता होस् भन्नाका लागि अघि बताएको कुराको सारसङ्क्षेपमा फेरि भगवान् रामबाट आज्ञा हुन्छ । (हे भाइ लक्ष्मण, यो जो जगत् देखिन्छ त्यो सारा माया हो अर्थात् नभएको कुरा हो ।) चतु:श्लोकी भागवतमा भनिएको छ– "वस्तु होइन तर भ्रमले प्रतीत हुन्छ भने त्यो माया हो ।" यसै हुँदा चित्तले सबै हटाएर म परमात्माको भावनाद्वारा शुद्ध मन भएर बस । सारा दु:ख हटेकाले सुखी होऊ, अझ त्रिपुटीको नाश गरेर आनन्दरूप होऊ । (हुन त आत्मा आनन्दरूप नै हो तैपनि घाँटीमा लगाइराखेको हार बिर्सिएजस्तै पाएकै कुरा पाएजस्तै हो ।) मायारूप उपाधिले रहित होऊ । (यहाँ भगवान् रामले लक्ष्मणलाई तीन आशीर्वाद दिनुभएको छ ।) पहिले सत्त्वगुणी सुखी अर्थात् रसास्वादको सुख होस् भन्नुभयो । अनि निर्विकल्प समाधिमा निर्गुण आनन्दमय होऊ भन्नुभयो । अज्ञानको नाश होस् भन्नुभयो ।

**यः सेवते मामगुणं गुणात्परं**
**हृदा कदा वा यदि वा गुणात्मकम् ।**
**सोहं स्वपादाञ्चित रेणुभिः स्पृशन्**
**पुनाति लोक त्रितयं यथा रविः ॥६१॥**

त्यो निर्गुणै मकन भज्दछ यो मनैले
कैलेकहीं सगुण रूप पनी भजेमा ।
त्यो मै हुँ नै चरणको त्यसको धूलोले
श्रीसूर्यले सरि त्रिलोक पवित्र पार्छ ॥

(भजन गर्ने सच्चा भक्तहरूले अरूलाई पवित्र पार्छन् भन्ने यहाँ बताइन्छ ।) जसले जुनसुकै बखतमा पनि निर्मल बुद्धिले गुणदेखि पर अर्थात् मायादेखि पर रहेका अगुण अर्थात् सत्त्व, रज र तम यी तीन गुणले रहित भएको मेरो ध्यान गर्छ अथवा गुणात्मक अर्थात् सर्वज्ञत्व

आदि अलौकिक गुणले युक्त भएको म राम आदि सगुण स्वरूपको भजन गर्छ भने त्यो भक्त मेरो स्वरूप हो । त्यस्तो भक्तको पाउको धूलौले छुँदा तीन लोक पवित्र हुन्छ अर्थात् सबैको हृदयमा रहेको अज्ञानरूपी अन्धकारलाई हटाइदिन्छ । जस्तो सूर्यनारायणले आफ्ना किरणले तीन लोकको अन्धकार नष्ट गरिदिनुहुन्छ । (त्यस्तै भक्त पनि साराको अज्ञान नष्ट गर्न समर्थ हुन्छन् ।)

**विज्ञानमेतदखिलं श्रुतिसारमेकं**
**वेदान्त-वेद्य-चरणेन मयैव गीतम् ।**
**तः श्रद्धया परिपठेद् गुरु-भक्ति-युक्तो**
**मद्रूपमेति यदि मद्-वचनेषु भक्तिः ॥६२॥**

विज्ञान यो सकल हो खुद वेदसार
वेदान्त-लक्षित मबाट बताइएको ।
सश्रद्ध पढ्दछ त जो गुरुभक्ति-युक्त
मद्रूप हुन्छ यदि गर्छ ममाथि भक्ति ॥

(यदि श्रद्धासाथ पाठ गऱ्यो भने मात्र पनि ठूलो फल पाउँछ भन्ने यहाँ बताइन्छ ।) यो सारा वेदको सार भएको विशेष ज्ञान अर्थात् अनुभव गराउने यो गीता वेदान्तबाट चरण जानिने अर्थात् जगत्को जन्म आदिको कारण भएको सच्चिदानन्दस्वरूप मैले नै बताएको हुँ । जसले श्रद्धापूर्वक अनि गुरुभक्तिका साथ राम्ररी पाठ गर्छ र मेरो वचनमा विश्वास गर्छ भने त्यसको चित्त शुद्ध हुन्छ अनि मेरो अनुग्रहबाट मेरै स्वरूप हुन्छ ।

# रामहृदयम्

ततो रामः स्वयं प्राय: हनूमन्तमुपस्थितम् ।
शृणु तत्त्वं प्रवक्ष्यामि ह्यात्मानात्म-परात्मनाम् ॥१॥
आकाशस्य यथा भेदस्त्रिविधो दृश्यते महान्
जलाशये महाकाशस् तदलच्छिन्न एव हि ।
प्रतिविम्बाख्यं मपरं दृश्यते त्रिविधं नभ ॥२॥
बुद्ध्यवच्छिन्न-चैतन्यमेकं पूर्णमथा परम् ।
आभासस् त्वपरं विम्ब-भूतमेवं त्रिधा चितिः ॥३॥
साभास-बुद्धेः कर्तृत्वमविच्छिन्नेऽविकारिणी ।
साक्षिण्या रोप्यते भ्रान्त्या जीवत्वं च तथाः बुधैः ॥४॥
आभासस्तु मृषा बुद्धिरविद्या-कार्यमुच्यते ।
अनिच्छिन्नं तु तद् ब्रह्म विच्छेदस्तु विकल्पितः ॥५॥
अविच्छिन्नस्य पूर्णेन एकत्व प्रतिपाद्यते ।
तत्त्वमस्यादि-वाक्यैश्च साभासस्याहमस्तथा ॥६॥
ऐक्य ज्ञानं यदोत्पन्नं महावाक्येन चात्मनाः ।
तदाऽविद्या स्व-कार्यैश्च नश्यत्येव न संशयः ॥७॥
एतद् विज्ञाय मद-भक्तो मद् भावायो पपद्यते ।
मद्-भक्ति-विमुखानां हि शास्त्र-गर्तेषु मुह्यताम् ।
न ज्ञानं न च मोक्षः स्यात् तेषां जन्म-शतैरपि ॥८॥

